ग्रन्थको नाम : तेस्रो अष्ट्रेलियायात्राको दैनिकी
लेखक : श्रीशरदकुमार भट्टराई



प्रकाशिका : श्रीमती इन्दिरा भट्टराई
विजयचोक, प्रयागमार्ग,
बत्तीसपुतली–९, काठमाडौं
फोन : ४११००५८

प्रकाशन मिति : वि.सं. २०६९ नववर्ष

प्रकाशित सङ्ख्या : २०० प्रति

मूल्य : रू. १००।–

कम्प्युटर सेटिङ्ग : श्रीखड्गप्रसाद खनाल

मुद्रक : पिग्मा प्रिन्टर्स एण्ड सप्लायर्स प्रा. लि.
चाबहिल, काठमाडौं

*इन्दिरा भट्टराई*
*विजयचोक, प्रयागमार्ग*
*बत्तीसपुतली–९, काठमाडौँ*

*फोन : ४११००९५*
*४११००५८*



# प्रकाशिकाका तर्फबाट

६ दशकभन्दा दीर्घ हाम्रो जीवनयात्रामा म उहाँकी प्रतिच्छायाका रूपमा सधैँ सहचारिणी भएर रहेँ । पहाडको अनकण्टार कण्टकाकीर्ण मार्गबाट शुरु भएको हामीहरूको जीवनयात्रा अनेक वाधा, व्यवधान, अभाव, सुख र दुःखका ओराली उकाली हुँदै अघि बढेको यात्रा अझै पनि जसरी तसरी अनवरत चलिरहेको छ । प्रारब्धले कहाँसम्म पुऱ्याउँछ थाहा छैन । अनजान गन्तव्यतिर यो यात्रा अझै चल्दै जानेछ, यो नै नियति हो । हाम्रो साहचर्यको बेलीविस्तार अनुस्मृति अर्थात् जीवनयात्रामा प्रकाशित भइसकेकाले यहाँ धेरै नलेखौँ ।

समय समयमा उहाँले कैयौँपटक गर्नुभएका विदेशका यात्राहरूमा घरगृहस्थीको व्यस्तताले गर्दा भारत बाहेक त्यसमा पनि खास गरेर तीर्थ यात्रा बाहेक अरू यात्राहरूमा उहाँलाई मैले साथ दिन सकिन । यसपटक चाहिँ सबै व्यवहारबाट निवृत्त भइसकेका कारण कान्छा छोराका पाहुना भएर उहाँसाथै समुद्रपारिको सुखद यात्रामा मैले जाने सौभाग्य पाएँ । यो यात्रा मेरा लागि रोमाञ्चकारी र अविस्मरणीय भएको छ । हाम्रा साझा अनुभूति र अनुभवहरू दैनिकीमा लिपिबद्ध भइसकेका छन् । छोटो अवधिको सुदीर्घ संस्मरणका रूपमा यो रहने छ । यो व्यक्तिगत टिपोट र यसमा गुम्फित कटुमधु अनुभवहरू सबैका लागि सुपाच्य र स्वीकार्य नहुन पनि सक्तछन् । अतः त्यसका लागि अन्यथा नसम्झिएर बिर्सिदिनु भन्नु बाहेक यो प्रकाशिकासँग अरू कुनै अर्को बाटो छैन ।

२०६९ नववर्ष

ईन्दिरा भट्टराई

***शरत्कुमार भट्टराई***
विजयचोक, प्रयागमार्ग,
बत्तीसपुतली–९, काठमाडौँ

टेलिफोन : ४११००५८
४११००९५



# यात्राको भूमिका

संसारको गरेँ यात्रा जहिले पृथ्वीमा झरेँ ।
पञ्चाग्निमा हुँदै होम आमाको गर्भमा परेँ ॥

घुम्नु पर्ला कहाँसम्म थाहा छैन अझै पनि ।
विना होस घुमेको छु अन्धो बनेर फन्फनी ॥

अनन्त जन्मको जेथा बोकी सम्बल सञ्चिति ।
प्रारब्धकर्मले गर्दा भएँ मानिस सम्प्रति ॥

गरेँ यात्रा अरू धेरै त्यसैका चक्रमा परी ।
गएँ अष्ट्रेलिया घुम्न मायाका वशमा परी ॥

गर्दैछु भवको यात्रा यात्री भएर यो घरी ।
यात्राबाट उतारेर लगाऊ पार हे हरि ! ॥

यात्रा साहित्य लेख्न मैले २०५४ सालदेखि नै शुरु गरेँ । पहिलो यात्रा कविता २०५५ सालमा विविध यात्राका रूपमा साझा प्रकाशनबाट प्रकाशित भयो । जीवन एउटा अनवरत चलिरहने यात्रा भएको हुँदा पञ्चाग्निमा हवन हुँदै आमाको कोख र काखमा आएको कुराको प्रतीकका रूपमा विविधि यात्रामा परेको पहिलो कविता

'बाल्यजीवन' हो । त्यसमा –

**आँखामा रिक्तता बोकी भरी हृदयमा भ्रम ।**
**यात्री भएर आएथेँ आमाका गर्भबाट म ॥**

त्यो यस योनिको पहिलो यात्रा थियो । त्यसपछि यो यात्री विभिन्न उकाली र ओरालीको यात्रा गर्दै अन्तिम यात्रामा पुग्दछ । 'बृद्धावस्थामा र भन्दछ –

**अर्को जन्म लिएर खानु नपरोस् संसारको चक्कर ।**
**मेरो यो भगवन् ! अनन्त जुनिको यात्रा इतिश्री गर ॥**

– विविध यात्रा २०५५

त्यसपछि पनि बाह्ययात्रा र आन्तरयात्राको क्रम अघि बढ्दै गयो । 'अहम्' र 'मम'को यात्रा अझै विस्तृत हुँदै गयो र त्यस क्रमले अन्ततः संयुक्त राज्य अमेरिका र अष्ट्रेलियासम्म पनि पुऱ्यायो । यसै अनवरत यात्राको परिणतिका रूपमा २०५८ सालमा यात्रैयात्रा जन्मियो । त्यसको एउटा कविता –

**पृथ्वीमा जहिले आएँ सम्झेँ भ्रमण अन्तिम ।**
**अझै होस हराएर घुमिरेछु म सम्भ्रम ॥**

– यात्रैयात्रा २०५८

तीर्थयात्राको वृत्तान्त २०६४ सालमा बाहिर आयो । बाह्य यात्रापछि आन्तर यात्राको क्रममा जुन पद्यमा थोरै र गद्यमा धेरै लेखिएको छ । त्यसमा परेको एउटा पद्य यस्तो छ –

**थाकेँ साह्रै भ्रमण अति भो पर्छु हे नाथ ! पाउ ।**
**मेरो यात्रा अब सक तिमी हात मेरो समाऊ ॥**

– यात्रैयात्रा २०५८

यस क्रमले चरम अवस्था जीवनयात्रा अर्थात् अनुस्मृतिमा

गएर पायो। यो समग्र जीवन यात्रा सचित्र ६५० पृष्ठमा गद्यमा बाहिर देखा पर्‍यो। गद्यमा लेख्तालेख्तै पनि भावनाको बाढी चलेर ठाउँ ठाउँमा कविताको प्रस्फुटन भयो विभिन्न विधा र छन्दमा। जस्तै –

लेखौँ जीवनयात्रा यो के लेखौँ छक्क पर्छु म।
उसको रचना सामु अति नै तुच्छ ठान्छु म॥
लेखायो जसले लेखौँ म ता निमित्त मात्र हुँ।
प्रतिबिम्ब उसैको म संसारी एक पात्र हुँ॥

– जीवनयात्रा २०६७

अब लेख्तिन संसारी कुरा भन्ने ठान्दा ठान्दै पनि फेरि उसै अन्तर्यामीले यो अष्ट्रेलिया यात्रा गरायो र यो 'तेस्रो अष्ट्रेलियायात्राको दैनिकी' पनि लेखायो। यसमा पनि म केवल एउटा निमित्त पात्र हुँ।

लेखायो उसले जे जे लेखौँ निमित्त भैकन।
यसमा क्यै कतै छैन मेरो आफ्नू कुनै पन॥

सर्वसाक्षी महान् आत्मन्! मिथ्या आभास यो क्षण।
तिम्रो नै सिर्जना गर्छ तिमीलाई समर्पण॥

अन्त्यमा यसमा उल्लेख भएका कुराहरू दैनिकी लेख्ता टिपोटमा परेका तीता मीठा कुराहरू तत्कालीन भावुक अनुभवको परिणति मात्र भएकाले यसका अध्येताहरूले अन्यथा नसम्झीकन पढ्न, स्वीकार्य कुरा भए लिन र अन्यथा भए विस्मृतिका गर्ततिर विसर्जन गरिदिनुहुन आग्रह गर्दछु। धन्यवाद।

२०६९ नव वर्ष

विनीतः
शरदकुमार भट्टराई

# तेस्रो
# अष्ट्रेलियायात्रा
# को
# दैनिकी

कान्छो छोरो श्रीसगुनकुमार भट्टराई तथा कान्छी बुहारी श्रीमती पूजा भट्टराईको चिरञ्जीवी पुत्र सुदीप भट्टराईको जन्म गत वर्ष २०६७ साल फागुन २२ गते अष्ट्रेलियाको सिड्नी शहरमा भएको थियो । पास्नी अर्थात् अन्नप्राशनका लागि छोरा र बुहारी नाति सुदीपलाई लिएर गत श्रावण महिनाको २५ गते घर नेपाल गएका थिए । श्रावण महिनाको ३० गतेको शुभ साइतमा अन्नप्राशन सम्पन्न गरियो । आफ्ना परिवारभित्रका इष्टमित्रलाई प्रीतिभोजमा आमन्त्रण गरिएको थियो । छोराबुहारीहरू नाति सुदीप सहित अन्नप्राशनपछि अष्ट्रेलिया फर्किए ।

२०६८ सालको नवदुर्गापूजा र शुभविजयाको टीका समेत अष्ट्रेलियाको सिड्नीशहरको Homebush, East Bourne Road मा रहेको छोरा सगुनका नयाँ घरमा नै सम्पन्न गर्ने सदिच्छा राखेर छोरा सगुनले हामी दम्पती दुवै जनालाई बोलाएको हुँदा ६ महिनाको अष्ट्रेलियाको भिसा लिएर २०६८ साल असौज ६ गते तदनुसार सन् २०११ सेप्टेम्बर २३ तारिख



प्रस्थानका समयमा नातिनी सुजाताबाट टीका ग्रहण गर्दै

शुक्रबारका दिन बिहान १० बजे काठमाडौंको घरबाट प्रस्थान गरेर हामीहरू त्रिभुवन अन्तराष्ट्रिय विमानस्थल गयौँ । त्यहाँबाट अपराह्न १:१५ मा सिङ्गापुर एयरलाइन्सको सिल्क हवाइजहाजमा चढेर हामीहरू सिङ्गापुरतर्फ उड्यौँ । राति स्थानीय समय अनुसार ८:१५ मा सिङ्गापुरको विशाल तथा रमणीय चाङ्गी विमानस्थलमा हामीहरू उत्रियौँ । नेपालको समय अनुसार त्यसबेला साँझको ५:४५ बजेको थियो । काठमाडौंदेखि सिङ्गापुरको हाम्रो उडान ४ घण्टा ३० मिनेटको थियो । विमानस्थलभित्रै रहेको होटेलमा त्यो रात बसेर अर्को दिन सिड्नी उड्ने कार्यक्रम थियो । सो अनुसार हामीहरू विमानबाट बाहिर निस्कियौँ । श्रीमतीलाई लामू बाटो हिड्न गाह्रो पर्ने भएकाले Wheel Chair को व्यवस्था गर्न काठमाडौँमा टीकट लिँदै एयरलाइन्सलाई अनुरोध गरिएको थियो । तदनुसार विमानको ढोकामा नै Wheel Chair अर्थात् पाङ्ग्रे कुर्सी आएको रहेछ । त्यसैमा इन्दिरालाई राखेर म बिस्तारै हिँडें । तर एयरटर्मिनल दोस्रोबाट होटेल मिसिलिनस रहेको स्थान तेस्रो टर्मिनल धेरै टाढा रहेछ । Wheel Chair लाई भेट्न मलाई झोला बोकेर हिड्न अत्यन्तै मुश्किल पऱ्यो । त्यहाँबाट पनि Mono Rail चढ्नुपर्नेरहेछ । भित्रको सुन्दर दृश्य हेर्दै हामीहरू होटेलमा पुग्यौं । होटेल राम्रो सुविधापूर्ण रहेछ । रातभर आनन्दसँग सुत्यौं ।



सिङ्गापुरको एयरटर्मिनलभित्र
Wheel Chair मा इन्दिरा

२०६८ साल असोज ७ गते तदनुसार सेप्टेम्बर २४ तारिखमा होटेलबाट बिहानै ५ बजे नै प्रस्थान गरी सिड्नी प्रस्थानका लागि गयौँ। ७:३० मा जहाज उड्यो। अहिले आकाशको अनन्त उचाइमा जहाज उडिरहेको छ। जहाज कहिले तल र कहिले माथि भएर थरथराउँदै उडिरहेको छ। अथाह गहिरो नीलो समुद्र माथिको नीलो अनन्त विशाल आकाशमा उडिरहेका छौँ। आकाश अत्यन्त स्वच्छ देखिन्छ। माथिबाटै अथाह जलराशियुक्त समुद्र म देखिरहेको छु। हामी आफ्नू सीटमा पेटी बाँधेर अत्यन्त त्रासका साथ बसिरहेका छौँ। मेरी श्रीमतीको यो नै पहिलो विदेशयात्राको लामू उडान हो। उनलाई पनि सायद त्रास लागिरहेको होला। मैले सोधेको छैन, तर हाउभाउबाट त्यस्तै भान भएको छ।

अत्यन्त लामू यात्राका लागि बिहान सिङ्गापुरबाट स्थानीय समय अनुसार ७:३० बजे अष्ट्रेलियाको सिड्नी जान यो विशाल विमान उडेको हो। निर्धारित समय अनुसार आज अपराह्न ४:३० बजे यो जहाज सिड्नी विमानस्थलमा अवतरण गर्ने छ र हामीहरू छोरा सगुनका साथ उनको निजी घरमा उनकै निजी गाडीद्वारा जानेछौँ।

अब हामीहरू घरको व्यवहारबाट निवृत्त भइसकेका छौँ। केवल बाँकी समय पठनपाठन र भगवान्‌को आराधना गरेर बिताउने इच्छा छ। मैले ३२ वर्ष लामू सरकारी सेवा गर्दा विश्वभरिका धेरै मुलुकहरू धेरैपटक घुमेको छु। नेपाल स्काउटको प्रमुख आयुक्त हुँदा ई.सन् २००२ जुलाईमा मैले ग्रीसको यात्रा गरेको थिएँ। त्यसपछि भने कुनै हालतमा पनि तीर्थयात्रा बाहेक विदेशको लामू यात्रा नगर्ने मैले सोचेको थिएँ। किन्तु नियतिले फेरि पनि यो तेस्रो पटक मलाई

अष्ट्रेलियाको भ्रमण गराएको छ । ६ महिनाको अनुमति लिएर आएका छौँ । हेरौँ सहज लागेमा ६ महिना बस्नेछौँ ।

हाम्रो जहाज स्थानीय समय अनुसार ४:४५ मा सिड्नी विमानस्थलमा अत्यन्त मुश्किलले अवतरित हुँदैछ । सिड्नी बाक्लो बादल र हुस्सुले ढाकिएको छ र सिमसिम पानी परिरहेको पनि बाहिर देखिन्छ । भर्खरै विमान धावनमार्गमा विस्तारै अवतरित भयो । हामीहरू विमानबाट बाहिर निस्कन तयार छौँ । जहाज भित्रै श्रीमती इन्दराका लगि Wheel Chair पर्खेर बसिरहेका छौँ ।

केही क्षणपछि Wheel Chair आयो र हामीहरू विमानबाट बाहिर निस्कियौँ । Wheel Chair लिएर आउने अष्ट्रेलियनले श्रीमतीलाई अत्यन्त जतनका साथ Wheel Chair मा राखेर गुडायो । म पछि पछि लागेँ । ३ ओटा झोलाहरू बोकेर मलाई हिड्न अत्यन्त मुश्किल भयो । अत्यन्त मुश्किलका साथ मैले पछ्याएँ । Immigration मा पुगेपछि अष्ट्रेलियन मित्रले हामीहरूलाई सहयोग गरे । त्यसपछि मन्सारमा पनि पार गराए । हाम्रो सामान बाहिर घुमिरहेको रहेछ । पुगेर जम्मा गर्‍यौँ । ट्रलीमा राखेर एयर टर्मिनलबाट बाहिर निस्कँदा आफ्नै गाडी लिएर हाम्रो स्वागत गर्न कान्छो छोरा सगुन, बुहारी र नाति सुदीपकुमार भट्टराई प्रतीक्षा गरिरहेका रहेछन् । आमालाई Wheel Chairमा आएको देखेर पहिले त उनीहरू झस्किए, तर पछि यथार्थ कुरा थाहा पाएपछि हर्षित भए । बाबुआमालाई अष्ट्रेलियाको घरमा भित्र्याउने आफ्नो धोको पुगेकोमा छोरा सगुन अत्यन्त खुशी भए र हामीहरू पनि अत्यन्त खुशी भयौँ । त्यो अपूर्वको मिलन थियो । हुन त पास्नी गरेर नेपालबाट उनीहरू यहाँ आएको १० दिन मात्र

भएको थियो । तर पनि भेट्ने सदिच्छाले होला अपूर्व मिलन जस्तै भयो। छोरा सगुनले हाँकेको सुन्दर नयाँ टोयोटा जीपमा अगाडिपट्टि बाबु छोरा बस्यौँ, पछाडिका सीटमा सासु, बुहारी र बीचमा नाति सुदीप बसे । बिस्तारै कुराकानी गर्दै आरामका साथ साँझ ५:४५ मा हामीहरू छोराको घरमा आएर प्रवेश गऱ्यौँ । दुई सुत्ने कोठा, दुई बाथरूम, बैठक र भान्सा समेत भएको अत्यन्त सुन्दर घर रहेछ। मेरी श्रीमतीलाई घर अत्यन्त मन पऱ्यो । नेपालमा पनि हाम्रो घर त्यस्तो होस् भन्ने उनी चाहन्थिन् ।

काठमाडौँदेखि सिड्नीसम्मको लामू हवाइ उडानले हामी दुवैजना अत्यन्त थाकेका थियौं । बुहारी पूजाले छुनु नभएकाले बेलुकाको भान्सा छोरा सगुनले आफैँ तयार गरे । साँझमा दाजुको छोरो प्रकाश, बुहारी सजिता, बुहारी पूजाका दाजु शेखर दाहाल र उनकी श्रीमती नीता हामीहरूलाई भेट्न आए । हामीहरूले सँगै खाना खायौँ । राति उनीहरू गए । त्यसपछि रातभरि आनन्दसँग सुतियो ।

२०६८ साल असोज ८ गते तदनुसार ई.सन् २०११ सेप्टेम्बर २५ तारिखका दिन लामू उडान र Jet Lag समेतले गर्दा शरीर थकित थियो । यसैकारणले गर्दा खाना खाएपछि हामीहरू आराम गरेर दिनभरि बसिरह्यौं । छोरा सगुन आफ्नू काम सकेर साँझ ५:१५ घर फर्किए । उनी बिदाको दिन बाहेक प्रत्येक दिन बिहान सबेरै ६ बजे काममा जाँदारहेछन् । कहिले साँझ ५ बजे र कहिले ७ बजे घर फर्कंदा रहेछन् । त्यो रात पनि थकाइ मार्दै आनन्दले सुतियो ।

आज असोज ९ गते २०६८ साल तदनुसार ई.सन् २०११ सेप्टेम्बर २६ तारिखको दिन हो । आज पनि गत दिन सरह नै

थकाइ मारेर दिनभरि घरमा नै आराम गरियो। अपराह्न ५ बजे छोरा सगुन कामबाट घर फर्किएपछि हामीहरू सबैजना बजार घुम्न गयौँ। सर्वप्रथम हिन्दूमन्दिरमा गएर भक्तिपूर्वक भगवान् श्रीशिवको र अन्य देवदेवीको दर्शन गऱ्यौँ। त्यसपछि बजार गयौँ। अत्यन्त ठूलो डिपार्टमेन्टल स्टोर रहेछ। तलैतला पारेर बनाएको सारै राम्रो अष्ट्रेलियाको दोस्रो विशाल बजार रहेछ। घुमेर हेरेर साध्य नहुने। धेरैबेर घुमियो र केही आवश्यक वस्तुहरू पनि किनेर रातमा घर फर्कियौँ। श्रीमती हिड्न नसक्ने भएकी हुँदा बजारमा बिस्तारै घुम्यौँ। केही ढिलो खाना खाएर आराम गरियो। राति राम्ररी निद्रा लाग्यो।

२०६८ साल असोज १० गते मङ्गलबार अर्थात् ई.सन् २०११ सेप्टेम्बर २७ का दिन बिहानको नित्यकर्म पछि हामी दम्पती दुवैजना प्रातःभ्रमणका लागि बाहिर निस्कियौँ। हरियालीयुक्त सफा राजमार्गको पेटी हुँदै बिस्तारै हामीहरू राजमार्गका किनारमा नै अवस्थित श्रीलङ्कनहरूको गणेशमन्दिरमा गयौँ। गणेश, सूर्य, नवग्रह आदि पञ्चदेवताको स्थापना गरेर पूजा गरिँदो रहेछ। अत्यन्त सुन्दर व्यवस्था देखियो। दर्शन पछि बिस्तारै घुम्दै आइयो र खानापछि दैनिकी लेख्ने र अद्वैतवेदान्तको अत्यन्त दुरूह ग्रन्थ अद्वैतसिद्धिको अनुवाद गर्ने काम शुरु गरेँ। जसको केही अंश नेपालमा छँदा नै मैले शुरु गरिसकेको थिएँ। यहाँ आएर अहिले त्यसैलाई अघि बढाउने प्रयास गरिरहेको छु। किन्तु अत्यन्त दुरूह विषय भएको हुँदा सफल हुने कुरामा शङ्का नै छ। हेरौँ के कस्तो हुन्छ ? साँझपख घुम्दै मन्दिरतर्फ जाने विचार गरेकोमा जाडो र पानी परेका कारण जान सकिएन। आजको दिन पनि समाप्त भयो। जीवनको एक दिन छोटियो।

२०६८ साल असोज ११ गते बुधबार तदनुसार ई.सन् २०११ सेप्टेम्बर २८ तारिखका दिन नवरात्रिको प्रथम दिन घटस्थापनाको दिन हो । म अत्यन्न सबेरै उठेर आफ्नू नित्यकर्म नित्यसन्ध्या, नित्यतर्पण, स्वाध्याय समेत सकेर घटस्थापना गरी नवदुर्गा पूजा, वेदचण्डी समेत पाठ गर्न तयार भएँ । छोरो सगुन, दाजुको छोरो प्रकाश, पूजाका कान्छा दाजु शेखर दाहाल र पराजुली, बस्याल समेत पूजामा सम्मिलित भएका थिए । बुहारी पूजाले पूजाको सामाग्री तयार गरिदिएपछि घरको बरण्डामा नवदुर्गाको मण्डप तयार गरी जमरा समेत राखी नवदुर्गाको पूजा प्रथम दिन जयन्तीदेवीको पूजा विधिपूर्वक गरियो । मैले पूजा सकेर शुक्लयजुर्वेदको प्रथम अध्याय र दुर्गासप्तशतीको प्रथम अध्यायको पाठ गरेँ । पाठ गर्न सकेसम्म भतिज प्रकाशले प्रयास गरे । प्रथम दिनको नवदुर्गा पूजा सङ्क्षिप्त तर विधिपूर्वक सम्पन्न गरियो । प्रथम दिनकी देवीको नाम जयन्ती हो । अपराह्न भ्रमणमा जान हावा र पानीले गर्दा सकिएन । साँझमा नवदुर्गाको आरती र सप्तशतीको चारौँ अध्याय पाठ गरेँ । सगुन कामबाट अँध्यारो भएपछि आएका हुँदा बजारतिर घुम्न जान सकिएन । राति खाना खाएपछि Film Sholay हेरेर सुतियो ।

आज २०६८ साल असोज १२ गते नौरथाको दोस्रो दिन द्वितीया हो । आफ्नो नित्यकर्म स्नान सन्ध्या अर्थात् गायत्रीजप, तर्पण र नियमित पाठ गरिसकेपछि म नवदुर्गा स्थापना गरेको कौसीमा गएँ । त्यहाँ पानीका बाछिट्टा सहितको चिसो बतास चलिरहेकाले अत्यन्त सङ्क्षिप्तमा पूजा आजा समाप्त गरेँ । दोस्रो दिनकी देवी मङ्गला हुन् । त्यसपछि बैठकमा नै बसेर वेद र सप्तशती चण्डीको दोस्रो चरित्र पाठ गरेँ । दिन केही

उघ्रिएको हुँदा श्रीमतीका साथ East Bourne Road को किनारै किनारा पेटी हुँदै Home Bush Area मा नै पर्ने हिन्दू मन्दिरमा गइयो । त्यो मन्दिर यस ठाउँमा बस्ने श्रीलङ्काका हिन्दू तामिलहरूले बनाएका रहेछन् । त्यस मन्दिरमा नवग्रह लगायत थुप्रैथरी देवीदेवताका मूर्तिहरूको स्थापना गरिएको रहेछ । दर्शन प्रसादग्रहणपछि त्यतैबाट हामीहरू तमिलहरूको पसलमा गएर खानेकुरा किनेर घर फर्कियौँ । हामी घर फर्कने बित्तिकै बाहिर पानी बर्सियो र चिसो हावा पनि चल्यो । फर्केर दिनको खानापछि दैनिकी लेख्ने र अद्वैतसिद्धि थोरै मात्रामा भए पनि अनुवाद गर्ने काम गरेँ । स्वल्पाहारपछि अपराह्न ५ बजे सायंभ्रमणमा गयौँ । ६ बजे साँझ फर्केर आयौँ । छोरो सगुन कामबाट आइपुगे । सुदीपसँगै खेल्ने कामपछि भगवतीको बेलुकाको आरति र सप्तशती चण्डीको चारौँ अध्याय *‘शक्रादय सुरगणाः’* समेत पढेँ र रातिको सात्त्विक खानापछि आराम गरियो ।

२०६८ साल असौज १३ गते शुक्रबार तदनुसार ई.सन् २०११ सेप्टेम्बर ३० नबरात्रि दुर्गा पूजाको तेस्रो दिन हो । आज पनि सधैँ जस्तो बिहान उठेर आफ्नू नित्यकर्म गायत्रीको आराधना, भगवत्स्मरण, नित्यतर्पण, नित्यस्वाध्याय गर्नेगरेका वेद, गीता र श्रीमद्भागवतको पाठपछि नवदुर्गा देवीको पूजा गरेँ । त्यस दिन शुक्लयजुर्वेदको तेस्रो अध्यायको पाठ गरेँ । नित्य पाठ गर्दा प्रत्येक दिन २ मन्त्रमात्रै म पाठ गर्दछु तर नवरात्रिमा भने शुरु प्रतिपदादेखि नै एक एक अध्यायका दरले म पाठ गर्दैछु । आज तृतीया अर्थात् नवरात्रिको तेस्रो दिन भएको हुँदा मैले तेस्रो अध्यायको पाठ गरेको हुँ । त्यति गर्दागर्दै बिहानको १० बजिसकेको हुँदा म श्रीमतीलाई लिएर

प्रातःभ्रमणमा निस्किएँ । बाहिर झलमल्ल घाम लागिरहेको भए तापनि चिसो हावा चलिरहेको थियो । यहाँ हिउँदभरि हावा चलिरहनेरहेछ र वातावरणलाई चिसो बनाइरहनेरहेछ । घुम्दै जाँदा सदा घुम्ने बाटो भन्दा अर्कै बाटोबाट हामीहरू घुम्दै Chinese को दुकानमा पुग्यौँ र हरियो साग किन्यौँ । त्यता प्रातःभ्रमण गर्दै हिन्दू देवताको मन्दिरमा पसरेर ११ बजे घर आइपुग्यौँ । बिहान पाठ गर्दा शुक्ल यजुर्वेदको मात्र पाठ गर्न भ्याएको थिएँ । सप्तशतीको उत्तरचरित्र ९ अध्याय पाठ गर्न बाँकी नै थियो । त्यो पाठ गरेर १२:३० बजे सकियो । १ बजे रक्तचाप बढ्ने डरले विनानूनको उसिनेको साग, आलु, ब्रोकाउली र दही चिउरा आनन्द साथ खाइयो । खाएपछि नसुत्नेभन्दाभन्दै जीउ अलि थाकेकाले केहीबेर सुतेँछु । उठेपछि नियमित दैनिकी लेख्ने र अद्वैतसिद्धिको अनुवाद गर्ने काम अहिले गरिरहेको छु । छोरो सगुन कामबाट साँझ ५ बजे घर फर्किएपछि हामीहरू उनकै गाडीमा चढेर सिड्नी गयौँ । गाडीबाटै Hardbour Bridge पार गर्दै बिजुलीको प्रकाशले जग्मगाएको अत्यन्त सुन्दर Sydney शहरको अवलोकन गर्दै राति ८ बजेपछि घर Homebush West फर्कियौँ । साँझमा नवदुर्गाको आरति र पाठ गरेर खाना खाएपछि आराम गरियो ।

आज २०६८ साल असोज १४ गते शनिबार तदनुसार ई.सन् २०११ अक्टोबरको पहिलो तारिख हो । आज छोरा सगुनको बिदा हो तापनि विशेष काम परेकाले बिहान १० बजे काममा गए । म आज केही ढिलो उठेँ । पूर्ववत् नित्य कर्म समाप्त गरेर नवदुर्गाको पूजा, वेद र सप्तशती चण्डीको दुर्गाकवच, अर्गला, किलक, सप्तशतीको प्रथम चरित्र पाठ गर्दा बिहानको १० बज्यो । १०:१५ बजे हामी प्रातःभ्रमणमा

निस्कियौँ। घाम लागेको थियो र चिसो कम थियो। Eastbourne Road हुँदै हिन्दूमन्दिर गयौँ। त्यहाँ नमस्कार गरेर हामीहरू त्यस भेकको विशाल खुला बजार हेर्न गयौँ। त्यहाँ दैनिकरूपमा चाहिने सबै कुरा पाइनेरहेछ। बजारको क्षेत्रफल विशाल रहेछ। केही हरिया सागपात किनेर हामीहरू बिहान ११:५० बजे घर फर्कियौँ। १:३० बजे दिनको खाना खाएपछि म दैनिकी लेख्दै छु। अहिले दिनको २:४५ बजेको छ। यो स्थान अत्यन्त शान्त छ। कुनै केही आवाज वा कोलाहल सुनिँदैन।

आज पनि दैनिकीको पूर्वार्ध लेखेपछि म पहिलेकै सरह अद्वैतसिद्धिको अनुवाद गर्न थालेँ तर त्यस्तो नव्यन्यायको शैलीमा लेखिएको दुरूह ग्रन्थको संस्कृतबाट नेपालीमा अनुवाद गर्न मलाई अत्यन्त मुश्किल परिरहेको छ। म अनुवाद पूरा गर्न सक्तिन कि ! जस्तो मलाई लाग्न लागेको छ। मैले योभन्दा पहिले पनि श्रीमद्भागवतका केही श्लोकहरूको समछन्दमा अनुवाद गरेर 'ज्ञान र भक्ति' प्रकाशन गरेँ, त्यस्तै रासपञ्चाध्यायी, ब्रह्मसूत्रसार, उपनिषत्सार, वेदान्तपरिभाषासार र चतुःसूत्रीको अध्यास, शाङ्करभाष्य र भामतीको अध्यासको अनुवाद पनि गरेर प्रकाशन गरिसकिएको छु। मैले अनुवाद गर्दा कहिल्यै पनि हिम्मत हारेको थिइन तर यसपटक भने अनुवाद गर्न अत्यन्त मुश्किल भएको छ, हेरौँ के हुन्छ ?

हिजोअस्तिजस्तै हामी आज पनि बेलुका ५ बजे घुम्न निस्कियौ र Chinese को पसलसम्म पुगेर १ घण्टामा ६ बजे घर फर्कियौँ। त्यतिबेला नै सगुन पनि कामबाट आइपुगे। सायंसन्ध्या र नवदुर्गाको पूजा आरतिपछि हामी आराम गर्न गयौँ।

आज २०६८ साल असौज १५ गते रविबार तदनुसार ई.

सन् २०११ अक्टोबरको २ तारिख हो । नौरथाको पाँचौं दिन । आज पञ्चमी तिथि हुनुपर्ने थियो तर त्यो टुटेको हुँदा षष्ठी तिथि हुन गयो । आज मैले नियमितरूपमा नित्य कर्म सकेपछि नवदुर्गाको पूजा गरेँ । त्यसपछि वेद र सप्तशती चण्डीको उत्तरचरित्र पाठ गरेँ । आजदेखि Australia को समय १ घण्टा पछाडि सरेको हुँदा हामी बिहान १० बजे घुम्न जाने गरेकोमा ११ बजे हिड्यौं । हिउँद र वर्षाको समयमा १ घण्टा समय अघि र पछि सर्ने चलन बेलायतदेखि पश्चिमी राष्ट्रहरूमा छ । तर नेपालमा त्यस्तो चलन नभएकाले हामीहरूलाई नौलो लाग्दछ । बाहिरबाट फर्किएपछि BBC Nepali Sewa, सुनेँ र २ बजे खाना खाइयो । अहिले म दैनिकी लेख्तैछु ।

हामी आएदेखि नै यहाँ पानी परिरहेको छ । पानी र बतास साथसाथै आउने हुँदा अति जाडो हुँदोरहेछ । बाहिर बतास चलिरहेको छ । हाम्रो घर अगाडिका मसलाका र अरू नचिनेका रुखहरू पनि हल्लिरहेका छन् । फेरि झल्याकझुलुक घाम लाग्न लागेको छ । बादल र घामले लुकामारी खेलिरहेका छन् तर पनि बाहिर चिसो नै छ । यस महादेशमा हाम्रो उपद्वीपमा भन्दा उल्टो खालको ऋतु आउँदोरहेछ । हाम्रोमा गर्मी र वर्षापछि जाडो अहिले आउँदैछ भने यहाँ चाहिँ हिउँदपछि गर्मी आउँदैछ । हाम्रा वसन्त ऋतुदेखि शिशिर ऋतुसम्म ६ ऋतु हुन्छन् किन्तु यहाँ ४ ऋतुमात्रै हुँदारहेछन् । बेलुकाको भ्रमणपछि घर फर्किएर सायंकालको देवीपूजा, आरति र सप्तशतीको चारौँ अध्यायको पाठपछि खाना खाएर आराम गरियो ।

आज २०६८ साल असोज १६ गते सोमबार तदनुसार ई.सन् २०११ अक्टोबर ३ तारिख हो । आज दशैँको सप्तमी

तिथि हो । सदाजस्तै नित्यकर्म, सप्तमीको दुर्गापूजा, आरति, वेद र चण्डी पाठ गरेपछि स्वल्पाहार गर्‍यौँ । त्यसपछि बिहानको स्थानीय परिवर्तित समय अनुसार ११ बजे प्रातःभमणमा गयौँ । सर्वप्रथम मन्दिरमा गयौँ र दर्शन गरेर घुम्दै Sydney open Market तर्फ गयौँ, तर शनिबार र आइतबार बाहेक त्यो बजार बन्द हुँदोरहेछ । बिस्तारै फर्किएर घुम्दै आयौँ । आज बिहान सिमसिम पानी परेको भए तापनि १० बजेपछि भने घाम लागेको छ । हिजोको जस्तो जाडो छैन । नेपालमा शरद्‌ऋतुको दशैँका घाम जस्तो घाम लागेको छ ।

हामीले हाम्रो अष्ट्रेलियाको दशैँघरमा राखेको जमरा उम्रदैनन् कि जस्तो लागेको थियो । किनभने हामीहरूले समुद्रकिनाराको बालुवा ल्याएर जमरा राखेका थियौँ । समुद्रका किनारको बालुवा नूनिलो हुनेहुँदा नउम्रिने हो कि ! भन्ने शङ्का लागेको थियो । एकातिर त्यस्तो आशङ्का थियो भने अर्कोतर्फ पानी परेर चिसो भइरहेकाले पनि उम्रन गाह्रो मानेको थियो कि ! हिजो हेर्दा पाँचौ दिनमा आएर जमरा टुसाउँन थालेको देखियो । यो देखेर मभन्दा पनि बढी छोरो सगुन खुशी भयो । भगवती प्रसन्न भएकी भन्ने मैले पनि ठानेँ ।

दैनिकी लेखनपछि सदाजस्तै म अब अद्वैतसद्धिको अनुवाद गर्न लागेको छु । यो अनुवाद गर्नु अत्यन्त कठिन छ र दुरूह पनि छ तापनि म जसरीतसरी अनुवाद गरिरहेको छु । किनभने मैले दशकौँदेखि गरिरहेको चिन्तन र ब्रह्माभ्यास छुट्छ कि ! भन्ने मलाई चिन्ता छ । काठमाडौँमा मैले गर्ने गरेको स्वाध्यायी साथीहरूका सँग स्वाध्याय र पशुपतिको शङ्कराचार्य मठमा प्रा.डा. दीर्घराज घिमिरेसँग चलिरहेको मेरो बृहदारण्यकोपनिषद्‌को पढाइ पनि छुट्न गएको छ । त्यो अमूल्य अवसरबाट म

वञ्चित भएको छु । मेरो अभ्यास र साधना छुट्छ कि ! भन्ने मलाई ठूलो चिन्ता छ । सायंभ्रमणपछि पूर्ववत् दुर्गाको पूजा र खानापछि आराम गरियो ।

आज असोज १७ गते २०६८ नवरात्रको महाष्टमी शुभपर्व हो । हामी नेपाली हिन्दूहरूको ठूलो चाड र धार्मिक उत्सवको दिन हो । नेपालमा सरकारी र गैरसरकारीरूपमा पनि धूमधामसँग शारदीय दशैं मनाइन्छ । अष्ट्रेलियामा भने घरमा नै सीमित भएर हामी मनाइरहेका छौं । आज पनि मेरो दिनचर्या प्रातःकालदेखि सायंकालसम्म हिजो अस्तिजस्तै रह्यो । दुर्गापूजा, पाठ, भ्रमण, खाना खानु, टी.भी. हेर्नु, बातचित गर्नु, नातिलाई खेलाउनु आदि आदि ।

साँझमा भतिज प्रकाश र उनकी श्रीमती सजिता आएका थिए । उनीहरूसँग नेपालको, यताउताको, परिवारको उनीहरूको भावी योजना सम्बन्धी कुरा गरियो वा सुनियो । उनीहरूलाई पुऱ्याउन सगुन गयो र फर्कियो पनि । त्यसपछि हामीहरू सुत्यौं ।

आज २०६८ साल असोज १८ गते बुधबार नवरात्रको महानवमी हो । ई.सन् २०११ अक्टोबर ५ तारिख हो । आज बिहान पहिलेकै सरह नित्य कर्म सकेर मैले दुर्गापूजा गरेँ । परदेश भएकाले सामान्य पूजा गरेँ । धूमधाम केही हुनसकेन । नेपालका हाम्रा घर घरमा भइरहेको धूमधाम सम्झिएँ । यहाँ पनि कान्छो छोरो सगुन, बुहारी पूजा, सानो नाति सुदीप र हामी दुवै दम्पती भएका हुँदा पूर्ण पारिवारिक वातावरणमा दशैंको उत्सव सम्पन्न भइरहेको छ । कुनै नियास्रो र अभावको अनुभूति छैन । दशैं र तिहारका बेलामा म धेरैपटक विदेशमा रहेको छु । कहिले बेलायत, कहिले जापान, कहिले फ्रान्स,

कहिले चीन र कहिले अष्ट्रेलिया । त्यसबेला नियास्रो लाग्दथ्यो । नेपाली राजदूत कहाँ जान्थेँ तर पनि पारिवारिक वातावरण हुँदैनथ्यो ।

यसवर्षको नौरथा अष्ट्रेलियामा कान्छा छोरा सगुनका घरमा मनाइँदै छ । यो हाम्रा परिवारको सुखद अवसर हो । काठमाडौँको घरमा श्रावण ३० गतेको शुभ साइतमा अन्नप्राशन गरियो र दशैँ मान्न हामीहरू यहाँ आएका छौँ । मेरा छोरातिर जन्मेको यो पहिलो नाति हो । कुलको वंशपरम्परा अगाडि बढाउने यही नाति हुनेछ । शुभविजयाको टीका अष्ट्रेलियाको घरमा लाउने अपूर्व मौका मिलेको छ भने दोस्रो कुरा अष्ट्रेलिया आएर शाकाहारी भएर पूर्ण सात्त्विकरूपमा जगदम्बा भगवतीको नौरथाभरि नियमपूर्वक पूजा गर्न पाएको छु । त्यतिमात्रै नभएर यो महादेश नेपालभन्दा टाढा छ । यो विपरीत गोलार्धमा अवस्थित छ । ऋतु र समय सबै उल्टापाल्टा छन् । धर्म, संस्कृति, हावा, पानी, शोचाइ सबै फरक छन् । किन्तु मानवीय संवेदना भने उस्तै छन् । सम्पन्न छन् र सहयोगी छन् । यहाँ आएदेखि नै नित्य शुक्ल यजुर्वेद, श्रीमद्भगवद्गीता र श्रीमद्भागवतको म पाठ गरिरहेको छु । यसमा पनि नवरात्रिभरि म सप्तशती चण्डी पनि पाठ गरिरहेको छु । यसो गर्दा मलाई अत्यन्न आनन्द लाग्दछ र कृतकृत्यताको अनुभूति हुन्छ ।

उपर्युक्त मेरो दिनचर्याका साथै मैले यहाँका सुन्दर, सफा तथा चौडा र शान्त सडकका पेटीमा हिँड्दा मैले काठमाडौँबाट मेमोरीकार्डमा भरेर ल्याएको श्रीमद्भागवतका मधुर श्लोकहरू बजाएर सुन्दै हिड्ने गरेको छु । त्यसबाट यस महादेशको सडक, चोक, चौबाटो र सम्पूर्ण वातावरण नै तरङ्गित

भएजस्तो मलाई भान हुन्छ । यी मधुर सङ्गीतमय श्लोकहरू सुन्दै हिँड्दा म आफैं नै यतैकतै हराउँछु । हिँड्दाहिँड्दै मलाई समाधि लागेजस्तो अनुभूति हुन्छ । यी अमृतमय वाणीहरू विदुषी शाम्भवी र शाकम्भरीका मधुर कण्ठबाट निस्किएका हुन् । यिनीहरूले व्यासबाट समाधि भाषामा रचिएका संस्कृत भाषाका मनोरम श्लोकहरूलाई अत्यन्त मनोहारी सङ्गीतका साथ अत्यन्त शुद्धरूपमा मधुर वाणीमा गाएका छन् । संस्कृतभाषाको सामान्य ज्ञान भएका रसिक व्यक्तिलाई पनि यसले सोझै आकर्षित गर्दछ र समाधिस्थ नै बनाइदिन बेर लगाउँदैन । सारै प्रिय र मधुर छन् यी गायन । यिनमा खास गरेर भीष्मस्तुति, वेणुगीत, गोपीगीत, वेदस्तुति समेत साह्रै श्रवणीय छन् ।

अहिले हाम्रो परिवार चारैतिर छरिएको छ । अब हामी नेपालमा मात्रै सीमित छैनौं । ठूली छोरी, ज्वाई र छोराछोरी समेत डीभी परेर संयुक्त राज्य अमेरिकाको टेक्सस राज्यमा बसोवास गर्दछन् । ठूलो छोरा बुहारी क्यानडामा छन् । यहाँ आएपछि एकपटक कुरा भएको थियो । विजयामा अष्ट्रेलिया आफ्नै एयरलाइन्सको जहाजमा आउन सके राम्रो हुन्थ्यो, नयाँ भतिजासँग भेट गर्थ्यौं भनेर मैले सम्झाएँ । सतीशको परिवार र कान्छी छोरी सविताका परिवार काठमाडौंमा दशैं मनाउँदै छन् । पहिले एकै ठाउँमा दशैं रमाइलोसँग मान्दथ्यौं, अहिले चारैतिर छरिएका छौं । नियतिले यस्तै नै चाहेको होला ।

बेलुकाको भ्रमण सकेर आएपछि छोराबुहारीसँग हामी गाडीमा घुम्न गयौं र Macdonal मा हामीहरूले Potato Fry तातातातै खायौं । घर फर्केर दुर्गापूजा, आरति, शक्रादय पाठ गरेर आराम गर्‍यौं ।

आज २०६८ साल असौज १९ गते विहिबार शुभविजयाको दशमी टीकाको दिन हो । बिहानको नित्यकर्म सकेपछि नवदुर्गा पूजा र विसर्जन गरियो । टीका लगाउन प्रकाश र उनकी श्रीमती, शेखर र उनकी श्रीमती



शुभविजयाको टीका छोरा, बुहारी र नातिलाई लगाईदिँदै दम्पती

र प्रमोद चापागाई पूजाका मामाको कान्छो छोरो समेत टीका लगाउन १० बजे नै आइपुगे । १० बजेपछि छोरा, बुहारी, नाति सुदीप समेतलाई आशीर्वाद सहित विजयाको टीका हामी दुवै दम्पतीले लगाइदियौँ । दिनको ३ बजेतिर नरनाथ दाहालका छोरा ध्रुव, उनका परिवार, कालिदासका छोरा प्रतीक र छोरी सृष्टि समेत टीका लगाउन आए । टीकाटालापछि खानपिन र खेलबाड गरेर उनीहरूले दिन बिताए । हामी दम्पतीले साक्षीभावले द्रष्टाका रूपमा दिन आनन्दसँग बितायौँ । बेलुका ६:३० बजे हामीहरू सबैजना हिन्दूमन्दिरमा भगवान्को दर्शन गर्न गयौँ । ८ बजे राति फर्किएर घर आयौँ र खाना पछि आराम गऱ्यौँ ।

आज बिहान क्यानाडाबाट छोरा सञ्जीवले टेलिफोन गरेका थिए । छोराबुहारी दुवैजनालाई आशीर्वाद र विजयाको शुभकामना दियौँ । त्यसैगरेर अमेरिकाबाट छोरी सरिता र ज्वाईं चण्डीले टेलिफोन गरेका थिए । काठमाडौंबाट छोरा सतीश, बुहारी र नातिनी सर्वज्ञासँग कुरा भयो । सबैलाई आशीर्वाद र शुभकामना हामीहरूले दियौँ ।

आज २०६८ साल असोज २० गते शुक्रबार पापाङ्कुशा

एकादशीको दिन, तदनुसार सन् २०११ अक्टोबर ७ तारिख हो । उठेर नियमित नित्यकर्म सन्ध्या, तर्पण, पाठ आदि सम्पन्न गरेँ । नवरात्र हिजो सम्पन्न भएकाले आज विशेष काम केही भएन । १० बजे प्रातःभ्रमणमा बाहिर गयौँ । सधैँको उही भारतीय पसल, उही चिनियाको पसलमा गएर रायोको साग किनेर घर फर्कियौँ । घर फर्किने क्रममा हाम्रो घर नजिकैको सडकका छेउमा रहेको सार्वजनिक विद्यालय Public School को Board मा सधैँ मेरो आँखा पर्दथ्यो र आज पनि पऱ्यो । पहिले पहिले त्यसमा लेखिएका अक्षरहरूमाथि म त्यति विचार गर्दिनथेँ । तर आज भने मैले तीमाथि चिन्तन गरेँ । लेखिएका English का अक्षरहरू Do right and Fear not थिए । त्यस कुराले मलाई छोयो । त्यो भनाइ अमूल्य ठानेँ । यही कुरा राजा महेन्द्रले पनि भनेका थिए – 'न बिराउनु, नडराउनु' मैले धेरै वर्ष अगाडिको कुरो सम्झिएँ । उनले ठीकै भनेका रहेछन् । दुर्भाग्य उनले भने अनुसार गरेनन् र उनकै कारण नेपालमा राजसंस्था समाप्त भयो । यसबारेमा धेरै नलेखौँ, इतिहासकारहरूले लेख्नेछन् र विश्लेषण पनि गर्नेछन् । आज दिनको खानापछि हामीहरू छोरा सगुनका गाडीमा चढेर बजार गयौँ । सगुनले हामीहरूलाई घुमाउन १० दिनको बिदा लिएको छ । ठूलो Department Store Target मा गएर नेपालमा चाहिने केही सामान किनियो । जसमा Night Gown पनि छ । धेरैबेर घुमेर थकित भएपछि हामीहरू साँझमा घर फर्कियौँ । साँझपछि रातको खाना खाएर हामी सुत्यौ । आज एकादशी भएकाले फलाहार गरिएकोले शरीर हलुङ्गो थियो । रातभरि राम्रो निद्रा लाग्यो ।

आज वि.सं.२०६८ साल असोज २१ गते शनिबार हो ।

तदनुसार सन् २०११ अक्टोबर ८ तारिख हो । आज शनिबार सबैको छुट्टी थियो । हुन त बुहारी पूजा छोरो जन्मेपछि पूरै बिदामा बसेकी छन् र सगुनले पनि १० दिन हाम्रै लागि बिदा लिएर बसेको हुँदा अहिले बिदैबिदा छ । यहाँ शनिबारको उल्लेख किन गरेको हो भने आज शनिबार यहाँ नजिकै Sydney Market धूमधामसँग लाग्दोरहेछ । त्यहाँ रोजी रोजी हप्ताभरि चाहिने फलफूल, साग आदि सस्तो मूल्यमा पाइने हुँदा अत्यन्त भीडभाड हुँदोरहेछ । नेपालका गाउँहरूमा लाग्ने हाट जस्तै मैले ठानेँ । हामी दम्पती पनि प्रातःकृत्य समाप्त गरेर भ्रमण र किनमेलका लागि त्यसै शनिबारे हटियामा गयौँ । किन्दाकिन्दै आलु, साग, ब्रोकाउली आदि धेरै किनेछौँ । बोक्न नसकेपछि छोरा सगुनलाई फोन गर्‍यौँ र गाडीमा राखेर लिएर घर फर्कियौँ । अत्यन्त रमाइलो नयाँ अनुभव भयो । खाना खाएर दैनिकी र अद्वैतसिद्धिको अनुवाद गरेँ । बिहानको हिँडाइले थाकेको हुँदा केही बेर सुतेँ । सामान्यरूपमा म दिनमा सुत्तिन । उठेपछि दिन केही चिसो भएकाले बाहिर घुम्न जाने कार्यक्रम रद्द गरियो । दिनभरि घरमा नै बसियो । अपराह्न सगुनको साथी राजेश, श्रीमती र छोरी आए । दिन जान लागेपछि गए । खास कुनै उपलब्धि विना दिन समाप्त भयो । टीभी र हिन्दी फिल्म हेरेर समय गयो । यहाँ आस्था र संस्कार जस्ता धार्मिक च्यानलहरू छैनन् । अतः जेसुकै पनि हेरेर समय बिताउनु पर्दछ । बेलुकाको खानापछि आराम गरियो ।

आज वि.सं. २०६८ साल असोज २२ गते आइतबार तदनुसार सन् २०११ अक्टोबर ९ तारिख हो । आज प्रातःकृत्य समाप्त गरेर प्रातःभ्रमणमा पूर्ववत् प्रस्थान गरियो । मन्दिर हुँदै बिस्तारै दुवैजना Sydney Market गयौँ । रविबार पनि

त्यहाँ साग, फलफूल आदि सबैथोक पाइने सस्तो मूल्यको बजार लाग्दोरहेछ । जाडोमा लगाउने ज्याकेट, मोजा र टोपी किनेर ११:१५ बजे घर फर्कियौं । खानापछि आज हामीहरू बालबालिकालाई दिएको ट्रेनको सुबिधाको उपभोग गर्दै नाति सुदीपलाई लिएर ४ जना ट्रेनबाट प्रस्थान गरेर हार्वर ब्रीजलाई ट्रेनबाट पार गरेर हामीहरू केही परको स्टेशनमा उत्रिएपछि फर्किएर हार्बर ब्रिजको नजिकैबाट हामीहरू घुम्दै घुम्दै ठूलो डुँगा अर्थात् फेरीमा चढेर समुद्रको यात्रा अत्यन्त रमाइलोका साथ गऱ्यौं । फेरीबाट उत्रिएपछि समुद्रको सुन्दर किनारामा बनेका गगनचुम्बी भवनहरूको अवलोकन गर्दै Sydney Opera House मा गयौं ।



Opera House अगाडि छोरा र नाति सहित दम्पती

त्यहाँको केही बेर दृश्यावलोकन गरी चित्रहरू लिएर हामी पहिले आएको ट्रेनद्वारा नै घरतर्फ आनन्दसाथ फर्किरहेका छौं । यो सबै दैनिकी म ट्रेनमा बसेर लेखिरहेको छु । ट्रेनको झ्यालबाट म थरीथरीको दृश्य देखिरहेको छु । हरियालीपूर्ण शहर, कतै अत्यन्त अग्ला गगचुम्बी घर र कतै ससाना छुट्टाछुट्टै परिवार बस्ने बेलायती तरिकाका घरहरू म देख्तैछु । यो यात्रा अत्यन्त रोचक र सुखद भएको छ । विभिन्न देशबाट आएका पर्यटकहरू विभिन्न भेषभूषामा देखिन्छन् । कोही सम्पूर्ण शरीर र मुखसमेत ढाकिने गरी लुगा लगाएका मुस्लिम नारीहरू देखिन्छन् भने कतै सारी र चोलो लगाएका भारतीय र नेपाली नारीहरू एउटै डिब्बामा बसेर यात्रा गरिरहेका छौं । शरीरको धेरैजस्तो अङ्ग देखाउन मन

पराउने गोरीहरू पनि साथै छन् । त्यतिमात्र नभएर चिनियाँ र भारतीयहरू पनि साथै छन् । चिनियाँलाई चेपाङ, भारतीय उपमहादीप अर्थात् भारत, बङ्गलादेश र पाकिस्तानतिरका मान्छेलाई धोती र गोराहरूलाई यहाँ बस्ने नेपालीले खैरे भन्दा रहेछन् । म भने त्यस्ता शब्दहरू प्रयोग गर्न मन पराउँदिन । किनभने यस्ता शब्दावली प्रयोग गर्नु म शिष्टता ठान्दिन ।

हामीहरू ट्रेनबाट Sydney Town को यात्रा, दृश्यावलोकन र परिभ्रमण सकेर अपराह्न ४:४५ बजे केही थकित भएर घर फर्कियौँ । बेलुका हिन्दी फिल्म हेर्‍यौँ र खानापछि सुत्यौँ ।

आज वि.सं. २०६८ साल असोज २३ गते सोमबार तदनुसार सन् २०११ अक्टोबरको १० तारिख हो । आज बिहान उठ्ता शरीर भारी, कपाल दुखिरहेको र रुघा लागेर नाकबाट पानी बगिरहेको रहेछ । बिस्तारै आफ्नू नित्यकर्म समाप्त गरेँ । सधैँजस्तो आज प्रातःभ्रमणमा म जान सकिन । बिहानको स्वल्पाहारपछि घरमा नै बसेर म अहिले दैनिकी लेख्ने काममा लागेको छु । त्यसपछि म अद्वैतसिद्धिको अनुवाद गर्नेछु ।

आज दैनिकीमा विगतको जस्तो केवल आफ्नो दिनचर्या मात्र नलेखेर म आफ्नै अनुभूतिलाई पनि यहाँ लिपिबद्ध गर्ने विचारमा छु । हामी दम्पती काठमाडौँबाट अष्ट्रेलिया प्रस्थान गर्नु अघिदेखि नै ६ महिना बस्ने विचारमा थियौँ र तदनुरूप नै अनुमति पनि लिएका थियौँ । तर यहाँ आएपछि हाम्रो पुरानु धारणामा परिवर्तन आएको छ । हामी पूरा ६ महिना बस्न सक्तैनौ कि ! जस्तो लाग्न थालेको छ । शुरुमा इन्दिराको ६ महिना बस्ने भन्ने थियो तर मेरो भने शुरुदेखि नै थिएन । अहिले २ हप्ताको अष्ट्रेलिया बसाइको अन्तरालमा उनको विचारमा परिवर्तन आएको छ । जाडो लाग्नु अघि नै काठमाडौँ फर्कने

विचार जन्मेको छ । हामी दुवैजना वृद्ध र रोगी छौँ । जुनसुकै बेला पनि बिरामी हुनसक्तछौँ । यहाँ औषधोपचार गर्न अत्यन्त महँगो छ, जुन सम्भव छैन । अरू कुराका अतिरिक्त त्यसकारणले पनि चाँडै फर्कनु आवश्यक भएको छ ।

वि.सं. २०३४ सालदेखि अहिलेसम्म पनि धेरै पटक विदेशको यात्रामा म गएको छु । मेरो प्रवास १०, १२ दिनको चीनको छोटो भएको थियो भने कहिले लामू प्रवास बेलायतको १ वर्षको, ३ महिनाको जापानको र १ महिना लामू संयुक्तराज्य अमेरिकाको भएको थियो । विदेशको छोटो बसाइमा मलाई कहिल्यै पनि घरको सम्झना हुँदैनथ्यो । अथवा अर्को शब्दमा भन्ने हो भने अध्ययनको अति व्यस्तताले गर्दा पनि घर सम्झने फुर्सद नै हुँदैनथ्यो । तर बेलायतमा १ वर्ष बस्ता शुरुमा धेरैजसो र जापनामा ३ महिना बस्ता मलाई घरको सम्झना आउँदथ्यो । त्यसबेला मैले सम्झिएको थिएँ परिवारको सम्झनाले त्यस्तो भएको होला । जसलाई English मा Home Sick भन्दछन् । किनभने त्यसबेला श्रीमती, छोराछोरी र आफन्त स्वजनबाट छुट्टिएर बस्नुपर्दा नियास्रो लागेर घर सम्झिएको हो कि ! भन्ने मैले ठानेको थिएँ, तर त्यसो होइनरहेछ । यो अनुभव अरूका लागि लागू नहुन सक्तछ तर मेरो लागि भने शतप्रतिशत लागू भएको छ । त्यो अनुभव के हो भने यसपालिको प्रवास भने पहिलेभन्दा अत्यन्त भिन्न छ । पहिले परिवारसँग छुट्टिएर कहिले अर्काको घरमा, कहिले होस्टलमा, कहिले क्याम्पस र धेरैजसो होटेलमा बस्नुपर्दथ्यो । किन्तु यसपालि भने कान्छो छोरो सगुनको आफ्नै घरमा श्रीमती इन्दिरा, छोरो, बुहारी र रहरको नाति श्रीसुदीपसँग पूर्ण पारिवारिक वातावरणमा बसिएको छ ।

अब हामीले हुरुक्क भएर सम्झनु र हेर्नु पर्ने खास कुनै कुरा पनि छैन । सतीशलाई नियमित रूपमा बिहान बेलुका औषधि खुवाउनु पर्ने हामी दम्पतीको अविभारा थियो, त्यो कुरा पनि अब बुहारी सुष्मिताले लिएकी छ ।

यसरी विचार गर्दा हामीहरूले गर्नुपर्ने दायित्व खासै छैन । तैपनि हामीहरूलाई र खास गरेर मलाई नेपालले नै तानिरहन्छ । नेपालको अपेक्षा यहाँ शान्ति छ, सबै कुरा सुलभ छन्, वातावरण स्वच्छ, हावा पानी अत्यन्त ताजा, सफा, खाना पिना मिसावटरहित प्राङ्गारिक मलबाट उत्पादित स्वस्थ पाइन्छन् । कुनै कुराको खाँचो छैन । हाम्रो इच्छा अनुरूप छोराबुहारीले सबै कुराको सेवा गरेका छन् । हाम्रो कान्छो छोरो साथमा छ । कोलाहलशून्य वातावरण छ । आफ्नै सुन्दर नयाँ टोयोटा गाडीमा छोरा सगुन इच्छा गरेका ठाउँमा सरर पुऱ्याउँछ । अर्को भाषामा यहाँ स्वर्गीय आनन्द छ । यहाँ साहु, आसामी, सरकार कसैको पनि डर छैन, अत्यन्न आनन्दपूर्ण बसाइ छ । तैपनि नेपालकै सम्झना आइरहन्छ, विपना र सपनामा पनि कहिले काहीँ पहाडको रावा लामीडाँडाको जन्म तथा बालक्रीडा गरेको थलोमा पुग्दछु भने धेरैजसो काठमाडौँको घरमा रहेको स्वाध्यायशालामा स्वाध्यायी मित्रहरूका साथमा नै म पुग्दछु । साथै पशुपति, देवपतनको शङ्कराचार्यमठमा म प्रवचन सुन्न र ब्रह्मचर्चा गर्नपुग्दछु । अद्वैतवेदान्तमा सधैँ रमाउन खोज्ने मेरा लागि यहाँ अष्ट्रेलियाको वातावरण र सुविधाले मलाई खास आकर्षण गर्न सकेको छैन । यहाँ पनि अद्वैतसिद्धिको अनुवाद गरेर, लेखेर र समय पाउँदा शास्त्रचिन्तन गरेर म बिताइरहेको छु ।

यसप्रकार उपर्युक्त अनुसारको मेरो सामान्य अनुभवमा

परिवार, घर, स्त्री, पुत्र आदिले हामी जस्ता संसारी मान्छेलाई तान्छ जस्तो मलाई पहिले लाग्दथ्यो, तर अहिले आएर यसपालिको अष्ट्रेलियाको प्रवासले मेरो पुरान् धारणालाई गलत साबित गरेको छ । हामीलाई तान्ने कुनै परिवार वा वस्तु नभएर हाम्रो अन्तःकरणमा जमेर बसेको संस्कार, वासना र आग्रह रहेछ । धेरै जन्मको वासना जबसम्म हाम्रो अन्तःकरणमा रहन्छ, तबसम्म त्यस वासनाले हामीहरूलाई तानिरहन्छ र घुमाइरहन्छ । स्वर्गबाट त के क्रममुक्तिमा ब्रह्मलोकसम्म पुगेको ज्ञानी साधकलाई पनि त्यसै वासना, संस्कार वा लेशाविद्याले फेरि घुमाएर यहीँ जन्ममरणको दुश्चक्रमा ल्याएर फेरि घुमाउँछ । यति बलिष्ट संस्कार वा वासनाले नै हामीहरूलाई कहीँ पनि चुप लागेर बस्न दिँदैन । मलाई पनि अहिले अष्ट्रेलियामा यस्तै भएको छ । पहिलो पटक यस्तो ज्ञान मलाई यस विषयमा भएजस्तो लागेको छ । मेरो यो अनुभव असत्य पनि हुनसक्तछ । हेर्दैजाऊँ, विश्लेषण गर्दै जाऊँ र अनुभव गर्दै जाऊँ । अझै अरू नयाँ क्षितिज उघ्रन्छ कि ?

*वासना अनि संस्कार आउँछन् यी घरी घरी ।*
*प्राणीलाई यिनैले नै बाँधिराख्छन् सधैँभरि ॥*

अष्ट्रेलिया २०, २५ हजार युवायुवती हाल केही पढ्ने र धेरैजसो काम गर्दारहेछन् । जताततै नेपालीहरूलाई हामीहरूले भेटयौँ । प्रायः धेरैजस्तो यहाँ सन्तुष्ट र सुखी नै देखिन्थे । यहाँ NRN देखि विभिन्न सङ्घ संस्थाहरू पनि खोलिएका रहेछन् । दशैँ, तिहार आदि भव्यरूपमा मान्नेगर्दारहेछन् ।

नेपालमा विभाजन भएजस्तै यहाँ पनि नेपाली कोही काङ्ग्रेस, कोही एमाले, कोही माओवादी भएर बाँडिएका रहेछन् । यो भोगभूमि भएकाले सबैजना कमाउने र खानेमा नै मस्त देखिन्छन् । परमार्थतर्फ शोच्ने कसैलाई फुर्सद छैन र त्यस खालको यहाँ वातावरण पनि देखिएन । केवल सतही ज्ञान र भोगवादी भएर मान्छे यहाँ बाँच्तोरहेछ । अर्को कुरा सानैदेखि घर र परिवारको स्नेह र संस्कार नपाइकन बाहिरबाहिरै बसेका युवायुवतीमा आफ्नाप्रतिको मान्यता न्यून हुँदोरहेछ । आफ्नू धर्म र संस्कृतिको ज्ञान कम हुँदोरहेछ । बहिर्मुखी हुँदारहेछन् । एकहोरो पन र एकसुरे हुँदारहेछन् । परिवार वा बाबु आमासँग घुलमिल हुन गाह्रो हुँदोरहेछ । कता कता हराएका र टोलिए जस्ता हुँदारहेछन् ।

आज खाना खाएपछि केही लेख्ने काम भयो । केहीबेर आराम गरियो । प्रातःभ्रमण नभएकाले अपराह्न ४:३० बजे भ्रमण गर्न बाहिर निस्कियौँ । सडक र पसलमा नेपालीहरू भेटिए । भलाकुसारी भयो । घर फर्किएपछि पारिवारिक गफगाफ, सन्ध्यावन्दना, टी.भी. र भिडियो अवलोकन, रातको भोजन अनि आराम सधैँझैँ भयो ।

आज २०६८ साल असोज २४ गते मङ्गलबार हो । तदनुसार २०११ अक्टोबर १२ तारिख । बिहान २:३० बजेदेखि नै मलाई निद्राले छाड्यो । नेपालमा जस्तै चाँडै बिउँझिएँ तर ओछ्यानमा पल्टिरहेँ । बुढेसकालमा आउने नानाथरीका तर्कना र ऊहापोहले मलाई कहिलेकाहीँ घेर्दछन् । आज पनि केही बेर त्यस्तै भयो । झ्याल खोलर सुतिएछ, शरीरमा चिसो लागेजस्तो भयो । बिस्तारै ओछ्यान छोडेँ र नित्यकर्म समाप्त गरेँ । आज Australian Reptile Park अर्थात् Zoo मा जाने कार्यक्रम

भएकाले प्रातःभ्रमणमा गइएन । स्वल्पाहारपछि ९:३० मा आफ्नै गाडीद्वारा प्रस्थान गरेर राजमार्ग अर्थात् Pacific Highway हुँदै अत्यन्त तीव्रगतिमा १०:३० तिर त्यहाँ पुगियो । राजमार्गको वारिपारि जताततै घना हरियालीपूर्ण वनका बीचबाट त्यो राजमार्ग जाँदोरहेछ । जता हेर्‍यो उतै हराभरा स्वच्छ वातावरण । घाम लागेको स्वच्छ आकाश अत्यन्त रमाइलो दिन थियो । Park भित्र प्रवेश गरियो । गोही, साना भालु, इमु चरो, उल्लु लाटोकोसेरो, कङ्गारु, पाइथन जस्ता ठूला सर्प र थुप्रै साना सर्पहरूका साथै विभिन्न माछाहरू पनि उपयुक्त प्राकृतिक वासस्थान बनाएर अत्यन्त राम्रोसँग राखिएको रहेछ । अत्यन्त चाखका साथ अवलोकन गरेर हामीहरू १२:३० बजे त्यहाँबाट प्रस्थान गरेर अत्यन्त सहजताका साथ १:३० बजे घर आएर केही हल्का खाना खाएर अहिले आराम गरिरहेका छौँ । अपराह्न घुम्न गएनौँ । शरीर थाकेको थियो । दैनिकी लेखन र अद्वैतसिद्धिको केही अनुवाद पछि भोजन गरेँ । आराम गरेर टी.भी. र हिन्दीचलचित्र हेरियो । यहाँ हामीलाई चाहिने र हाम्रो संस्कारमा मिल्ने धार्मिक कार्यक्रम हेर्नपाइँदैन । हामीलाई उपयुक्त नहुने जताततै हावादारी प्रसारण छन् । के हेर्ने ? कति लेख्ने ? कति पढ्ने र कति घुम्ने ? बाध्य भएर जे आए पनि हेर्नैपर्नेरहेछ । रातको खानापछि आराम गरियो ।

आज असोज २५ गते २०६८ साल अक्टोबर १२ बुधबार हो । बिहान ६:४५ मा उठेँ । यहाँ आएपछि बानी बिग्रिएको छ । प्रायः ढिलो उठ्तछु । कहीँ जानु छैन, कसैलाई भेट्नु छैन र केही पनि गर्नु छैन । उत्तरदायित्वविहीन भएको छु । छोरा बुहारीका आतिथ्यमा म आनन्दी भएको छु । किनमेल खास केही गरिन्न । गर्नुपरे पनि छोराले पैसा दिइहाल्दछ । खास गरेर सागपात जस्ता

वस्तुमात्रै किन्ने गरिएको छ । हामीलाई आवश्यक पर्ने चीज वस्तु छोराले आवश्यकता अनुसार किनेर ल्याएर राखिदिने गर्दछ । हामीहरूले आवश्यकता अनुसार उपभोग र प्रयोग गर्नेमात्रै हो । बढो आनन्द छ । अतिथि भएर बस्न बढो आनन्द आउँदोरहेछ । मेरो पहिलो अनुभव हो यो । हाम्रा शास्त्रहरूले भनेका पनि छन् – 'गृहेष्वतिथिवत् वसन्' (भा.११।१७।५४) यो कुरो सत्य रहेछ, अमूल्य रहेछ । मलाई भागवतको एक श्लोकको सम्झना आयो । जुन यस प्रकारको छ –

*गृहेष्वाविशतां चापि पुंसां कुशलकर्मणाम् ।*
*मद्वार्तायातयामानां न बन्धाय गृहा मताः ॥*

– भागवत ४।३०।१९

यस उमेरमा आएर बस्नुपर्ने यसरी नै रहेछ । शास्त्र कसरी झूट्टा हुन्थे ? भतिजो प्रकाशको निम्तोमा हामीहरू बिहान ११ बजे Harish Park गयौँ । अत्यन्त राम्रो Unit मा डेरा रहेछ । दुवैतर्फ खुला, सफा, सुत्ने दुई कोठा, ठूलो बैठक, भान्सा, बाथरूम, लुगाधुने Washing Machine Room र ठूलो कौसी रहेछ । त्यसै बैठकका कुनामा सानो पूजास्थान बनाएको रहेछ । हिन्दूदेवीदेवताका तस्वीरहरू, धूप, दीप, प्रसाद इत्यादि राखेको आस्थाका साथ । संस्कार राम्रो रहेछ । यसमा प्रकाशको भन्दा पनि उसकी श्रीमती सजिताको आस्था बढी देखियो, राम्रो लाग्यो । दिनको खानापछि दिनभरि गफगाफ, कुराकानी,



भतिज प्रकाश श्रीमती र छोरीका साथ

हिन्दीचलचित्र, टेलिभिजन हेरेर र खेलबाड गरेर दिन बिताइयो । म यहाँ आएर आफ्नो दिनचर्या, अभ्यास र साधनामा पछि

पर्दैगएको छु । सामान्य दैनिकी लेखन र अद्वैतसिद्धिको केही अनुवाद गर्ने काम बाहेक अरू दिनचर्या मेरा छुटेका छन् । खासगरेर ब्रह्माभ्यास मेरो छुटेको छ । साथीहरूसँग हाम्रो प्रौढ गुरुकुलमा हुने नियमित ब्रह्मचर्चा, ब्रह्माभ्यास र बिहान शङ्कराचार्यमठ पशुपतिमा गुरु दीर्घराज घिमिरेबाट शुक्रबार, शनिबार र रविबार हुने बृहदारण्यकोपनिषद्को प्रवचन वा स्वाध्याय पनि मेरो छुटेको छ । यहाँको सधैँ काममा व्यस्त रहने उपभोगवादी संस्कृति र संस्कारले मेरो यस अभ्यास गर्ने बानीलाई सहयोग गर्नसकेन । यसतर्फ सोच्ने र गर्ने यहाँ कसैलाई पनि फुर्सदै छैन । खासगरेर यहाँ बसेका युवायुवती नेपालीहरूमा पनि यो प्रवृत्ति देखिएन । भेला भएर दशैँ, तिहार, तिज जस्ता चाडवाड मनाउने, खानपिन गर्ने, खेलबाड भने अत्यन्त उत्साहका साथ नेपाली परम्परा अनुसार चाहिँ गर्दा रहेछन् । यो कुरा अत्यन्त राम्रो लाग्यो । दशैँ भर्सक विधिपूर्वक जमरा राख्ने, देवीको पूजा गर्ने र हिन्दूमन्दिरहरूमा भगवान् भगवतीको दर्शन गर्न जाँदा रहेछन् । लोग्ने मान्छेले टोपी लगाउने, महिलाले चोलो, सारी, सिन्दूर, टीका लगाउने र गहनाले भरिभ्कुट्ट पनि हुँदारहेछन् । खानामा सेल, रोटी, खसीको पक्कु, कबाफ र अन्य नेपाली परिकार बनाएर खाँदारहेछन् । नेपाली अचार, गुन्द्रुक, सिन्की, तामा, मस्यौरा, तितौरा आदि पनि खाँदा र खुवाउँदा रहेछन् । यहाँ नेपालीहरूको ठूलो उपस्थिति रहेछ । हामीहरू घुम्न जाँदा जता पनि नेपालीहरूलाई अत्यन्त प्रफुल्लित रूपमा देख्नेगर्दथ्यौँ । भतिजा प्रकाशका वासस्थानमा दिन पुरै बिताएर रातको खानासमेत खाएर राति ९ बजे घर फर्केर आयौँ र आराम गर्‍यौँ ।

२०६८ साल असोज २६ गते बृहस्पतिबार तदनुसार सन्

२०११ अक्टोबर १३ तारिख हो । आज बिहानको कृत्य सकेर १० बजे प्रातःभ्रमणमा गयौँ । घुम्दै जाँदा Sydney Market भित्र रहेको Australian Newzeland Bank मा गएर US$ 500 को 465.55 Australian $ साटचौँ । US$ का अपेक्षा Australian $ महँगो रहेछ । सटही Fee पनि लियो । US$ 500 को केवल Australian $ 465.55 मात्र दियो । सायद विदेशी देखेर बैङ्कले ठग्यो कि ! भन्ने मलाई लाग्यो । त्यस्तो नहोला मलाई लागेको मात्र त्यस्तो हुनसक्तछ । प्रातःभ्रमणबाट फर्किएपछि दिनको भोजन पछि अहिले म आरामका साथ दैनिकी लेख्तैछु । यसपछि म अद्वैतसिद्धिको अनुवाद गर्नेछु । आज दिनभरि लेख्ने र सुत्ने काम गरेँ । बेलुका घुम्न गयौँ । फर्किएपछि टी.भी. र हिन्दीचलचित्र हेरियो । रातको भोजनपछि आराम गरियो ।

आज वि.सं. २०६८ साल असोज २७ गते शुक्रबार तदनुसार सन् २०११ अक्टोबर १४ तारिख हो । बिहान ६:३० मा ओछ्यानबाट उठेँ । नित्यकर्म समाप्त गरेर ९:३० बजे प्रातः भ्रमणमा गयौँ । घुम्दै जाँदा Sydney Market मा गएर Magnifying Glass र एउटा Ladies Coat किनेर फर्कियौँ । दिनको खानापछि दैनिकी लेख्ने र अद्वैतसिद्धिको अनुवाद गरिरहेको छु । अपराह्न ४ बजेतिर हामीहरू मावली भाइ नरनाथ दाहालका छोरा ध्रुव दाहालका निम्तोमा त्यहाँ गयौँ । घरबाट निकै टाढा Liver pool भन्ने ठाउँमा रहेछ । साँझ ५:१५ बजे पुगियो । टाढा तर एकान्त र स्वच्छ ठाउँमा उनी परिवार श्रीमती, छोरा हिमांशु र छोरी सहित ४ जनाको परिवार लिएर बसेका रहेछन् । सगुनको unit जस्तै २ सुत्ने कोठाहरू, १ बैठक, बाथरूम र Washing Machine कोठा

समेत रहेछन् । सबैका unit उस्तै हुँदारहेछन् । श्रीमती रचना पढ्ने र काम गर्ने पनि गर्दिरहिछन् । छोराछोरी सरकारी पाठशाला अर्थात् Public School मा पढ्दा रहेछन् । P.R. अर्थात् Permanent Resident भएको हुँदा पढाइ पूर्ण निःशुल्क रहेछ । नेपालका सरकारी विद्यालयजस्तो नभएर अत्यन्त राम्रो पढाइ रहेछ । उनीहरू Australia मा नै बस्ने विचारमा रहेछन् । सधैँ दौडधूप र बाच्न सङ्घर्ष उनले अरू यहाँ बस्ने स्वदेशी सरह गरेको कुरा उनले बताए । नेपालमा उनलाई खान, बस्न, घुम्न र काम गर्नसमेत कुनै दुःख थिएन । बाबुले सबै व्यवस्था गरिदिएका थिए र अझै गरिरहेका छन् । एउटै छोरो, हिँड्दा कार, बस्ने कम्पाउण्ड भएको ठूलो घर, जग्गाजमीनसमेत छ । तर ४० वर्ष काटिसकेपछि उनलाई विदेशमा आएर दुःख गर्न किन मन लागेछ ? मलाई आश्चर्य लागेको छ । उनीमात्रै अपवाद नभएर नेपालका धेरैजसो सम्पन्न सबैजस्तो परिवारका विदेश गएका युवायुवतीहरूको यस्तै अवस्था छ ।



ध्रुव दाहाल श्रीमती, छोरो र छोरीका साथ

सङ्घर्ष गरेर बाँच्ने यहाँ बस्ने नेपालीहरूको वास्तविक नियति भइसकेको तथ्य ध्रुव दाहालसँग कुरा गर्दा र मैले गरेको छोटो समयको अनुभव समेतबाट थाहा हुन्छ । खालि आधुनिक वैज्ञानिक सुविधा र रमझममा बाँच्ने प्रयास गरिरहेका यी युवायुवतीहरूले भविष्य पनि शोच्ने फुर्सत पाएका छैनन् जस्तो मलाई लाग्यो । मानिसको जीवन पाएर पनि केवल खान र बाँच्नमा मात्रै सीमित हुने हो भने मान्छे भएर के भयो ?

जसले अर्को आगामी जीवनको बारेमा पनि सोच्न सक्तछ, त्यही नै सच्चा मानव हो । शास्त्रले भनेको पनि छ । जस्तै –

*आहारनिद्राभयमैथुनञ्च*
*सामान्यमेतत्पशुभिर्नराणाम् ।*
*धर्मो हि तेषामधिको विशेषो*
*धर्मेण हीनः पशुभिः समानः ॥*

यही कुरा त्यहाँ बसुञ्जेल मेरो मनमा खेलिरह्यो । त्यहाँ पनि टी.भी., सिनेमा, Laptop आदिमा सबैको दिन बित्ने रहेछ । न धार्मिक प्रवचन न धर्मको चर्चा । केवल ढोकाको सानो कुनामा देवता र पञ्चपात्रो आदि राखिएको थियो । रचनाले दियो बालिन् । यहाँ बस्ने सबै नेपालीहरूका आवासहरूमा पनि मैले त्यस्तै देखेको थिएँ । राती ९ बजिसकेको थियो । रातको खाना हामीले खायौँ । रचनाले हाम्रा लागि शुद्ध निरामिश स्वादिष्ट भोजन बनाएर सत्कार गरेकी थिइन् । धेरैथरी परिकार, दही, मिठाइ, फलफूल समेत श्रद्धापूर्वक पस्केकी थिइन् । उनमा अझै पनि नेपाली गृहिणीको संस्कार बाँकिरहेको मैल पाएँ, परिधान जे जस्तो भए पनि । राति ९:३० बजे त्यहाँबाट बिदा भएर १०:१५ बजे राति हामीहरू घर आयौँ र सुत्यौँ ।

आज २०६८ साल असोज २८ गते शनिबार सो अनुसार सन् २०११ अक्टोबर १५ तारिख हो । बिहानको नित्यकर्म सकेर ९:१५ मा प्रातःभ्रमणमा गयौँ । सदा झैँ Sydney Market को परिभ्रमण गऱ्यौँ र पासैको साग किनेर ११:१५ बजे घर आयौँ । शेखर दाहाल र श्रीमती विनीता दाहाल

आएका थिए । उनीहरूसँगै दिनको भोजन गरेर अहिले म दैनिकी र अद्वैतसिद्धि लेखिरहेको छु । अपराह्न ४ बजे हामीहरू घुम्न बाहिर निस्कियौँ । त्यसैबेला वसन्त कोइराला हामीलाई भेट्न फलफूल लिएर गाडीमा आएका थिए । तिनका गाडीमा हामी उसको वासस्थानमा गयौँ । त्यसबेला छोरा बुहारी बाहिर गएका थिए । वसन्त कोइरालासँगै फर्केर बेलुका ६ बजे घर आयौँ । छोराबुहारी घर आइसकेका रहेछन्, तर वसन्तसँग घुम्न गएकोमा छोरा सगुनले अन्यथा मान्यो । जुन कुरा मैले उसबाट अपेक्षा गरेको थिइन । उसबाट भएको व्यवहारले मलाई केहीबेर अन्यमनस्क बनायो तापनि मैले त्यसलाई सकारात्मकरूपमा लिएँ । उसमाथिको भ्रम पनि हट्यो र म केही हलुका जस्तो भएँ । त्यस बेला मैले कुन्तीले भगवान् श्रीकृष्णसँग मागेकी वरदानलाई सम्झिएँ । जस्तै –

*विपदः सन्तु नः शश्वत्तत्रतत्र जगद्गुरोः ।*
*भवतो दर्शनं यत्स्यादपुनर्भवदर्शनम् ॥*

भागवत १।८।२५

त्यसपछि रक्तचाप केही बढेकाले मेरो कपाल दुःखरिहेको थियो । खल्लो दूधभात खाएर अन्यमनस्कभावले सुत्न गएँ । मेरो कपाल रातभरि दुखिरह्यो ।

आज २०६८ साल असोज २९ गते आइतबार सो अनुसार सन् २०११ अक्टोबर १६ तारिख हो । हिजोदेखि दुखेको कपाल अझै पनि दुखिरहेको छ । ६:३० बजे ओछ्यानबाट उठेर बिस्तारै नित्यकर्म सकेर पहिलेकै जस्तै घुम्न गयौँ । घुम्ने क्रममा Sydney Market मा गएर नेपाल लान १० जोर मोजा किन्यौ र ११ बजे घर फर्कियौँ । अझै पनि कपाल गह्रौं नै भएकाले

खल्लो उसिनेको साग र दहीचिउराको भोजन गरेँ। अहिले दैनिकीरूपी गन्थन र अद्वैतसिद्धिजस्तो गहन शास्त्रको अनुवाद गरेर समयको सदुपयोग वा समय काटिरहेको छु।

आज प्रातःभ्रमणमा जाँदा एकजना खोटाङ जिल्लाको इन्द्रायणीपोखरी चिप्लुङ गाउँका राई भेटिए, सिङ्गापुर प्रहरीमा जागीर खाएर अवकाश पाएका उनी अहिले अष्ट्रेलियामा आएर काम गरिरहेका रहेछन्। उनले छोटो समयमा नै ३० हजार डलर खर्च गरेर Permanent Resident को VISA लिइसकेका रहेछन्। एउटा छोरो र एउटी छोरी रहेछन्। सानो परिवार रहेछ। छोरी यहीँ पढाइसकेर काम गर्दिरहिछन्। छोरो अमेरिकामा रहेछ। उनकी श्रीमती यहाँ बस्न मन नलागेर काठमाडौँको घरमा गएर बसेकी रहिछन्। उनको पहाडमा पुर्ख्यौली घर रहेछ। उनी भौतिक र आर्थिकरूपमा पनि सम्पन्न रहेछन्। तर परिवार चारैतिर छरिएको र अझै पनि धन कमाउने उनको तिर्सना गएको रहेनछ। सधैँ दौडधूप र तिर्सना पालेर बाँचेका रहेछन्। यहाँ मैले यस देशमा आएका नेपालीहरू मध्येको एक प्रतिनिधि पात्र मात्र यिनलाई लिएको हुँ। यहाँ धेरै त्यस्तै रहेछन्। हामी घुम्न जाँदा बाटामा केही नेपालीहरू भेट्तछौँ। कम वेश सबैको कहानी उस्तै उस्तै मिल्दो जुल्दो पाएँ। सधैँ दौडधूप, सधैँ हापाधापी, केवल खानाका लागि, केवल बाँच्नका लागि। यहाँ सबैलाई यहीँ बस्ने इच्छा हुँदोरहेछ। VISA, Working Visa, Temporary Visa, Bridging Visa, Permanent VISA र अन्त्यमा Citizenship पाउने सबैको दौडधूप हुँदोरहेछ। यहाँ केही नेपाली दुःखबाट सुख खोज्न आएका छन् भने अर्काथरी सुखबाट दुःख भोग्न आएका छन्।

छोराको आग्रहलाई अस्वीकार गर्न नसकेर हामी बाबुआमा यहाँ आएका हौँ । यसभन्दा अघि दुईपटक अष्ट्रेलिया आइसकेको हुँदा तेहेऱ्याएर फेरि आउने इच्छा मलाई थिएन । सात दशक उमेर नाघिसकेको मलाई कहीँ बाहिर जानु छैन, केवल मैले अब भित्र नै फर्कनु बाँकी छ । बाहिर धेरै घुमेँ अब रहर र शक्ति पनि छैन । श्रीमती इन्दिराको उमेर पाको र स्वास्थ्य कमजोर भएका कारण कतै हिड्न चाहन्नथिन् । कान्छो छोरो सगुनको आग्रहले गर्दा अशक्त हुँदाहुँदै पनि अत्यन्त मुश्किलले हवाइ जहाजको लाम् उडान गरेर यति टाढा आएका हौँ ।

यहाँका केही अनुभव र आफ्नू अनुभूति दैनिकीमा लेखिसकेर केही पङ्क्ति मात्र आज अद्वैतसिद्धिको अनुवाद गरेँ । जीउमा चिसो लागेर असजिलो भएजस्तो भयो, टाउको गह्रौं भयो र आलस्य बढ्यो । केहीबेर सुतेँ । उठेर साधा खाजा खाएपछि नजिकैको Park मा घुम्न अपराह्न ४ बजे सधैँझैँ निस्कियौँ । केही बेर घुमेर फर्किएर फेरि आराम गरेँ । सगुन कामबाट फर्कियो । टी.भी.को खबर, हिन्दी चलचित्र Wanted हेरियो । कति घुम्ने ? कोठामा सीमित भएर कति लेख्ने ? कोसँग बोल्ने ? अद्वैतको चर्चा कोसँग गर्ने ? यहाँ हाम्रो संस्कार र संस्कृति अनुसारका कुनै रेडियो र टी.भी. प्रसारण पनि छैनन्, हेरे पनि नहेरे पनि पश्चिमी संस्कृतियुक्त प्रसारण हेर्न बाध्य हुनुपर्दछ । यहाँको छोटो बसाई पनि यस्तै बाध्यतायुक्त र विसङ्गतिपूर्ण छ । बुहारीसँग के कुरा गर्ने ? अबोध शिशु नातिसँग कति खेल्ने ? मेरै उमेरका मेरैजस्तो संस्कार र संस्कृति बोकेका पाका मानिसहरूले वर्षौंवर्ष नयाँ संस्कार, संस्कृति र विचार बोकेका आफ्नै छोरा बुहारी, नातिनातिना र सम्बन्धीसँग यहाँ वा अरू पश्चिमी देशहरूमा

कसरी बिताउँदा हुन् ? आश्चर्य लाग्दछ । यस्तै तर्कवितर्क गर्दागर्दै साँझ बित्यो । रातको भोजनपछि शय्यामा गएँ । आजको अमूल्य दिन पनि समाप्त भयो । शेष जीवनको अर्को क्षण पनि गयो, जुन फेरि फर्केर आउँदैन ।

आज सं. २०६८ साल कार्तिक १ गते मङ्गलबार तदनुसार सन् २०११ अक्टोबर १८ तारिख हो । आज पनि शरीर केही गह्रौं र कपाल पनि दुखिरहेको छ । त्यसैकारण केही ढिला उठें । नियमित पूर्ववत् नित्यकर्म सकेर स्वल्पाहार गरेर ९:३० बजे प्रातःभ्रमणमा निस्कियौं । चाँडै घर फर्किएर मैले आज दैनिकी लेख्नथालेको छु ।

मेरो ज्येष्ठ सुपुत्र श्रीसञ्जीवकुमार भट्टराई युक्रेनमा गएर युरोनेटिकल विषयमा M.E. गरेर इन्जिनियर भएर नेपाल फर्केपछि बाबु आमाले व्यवस्था गरिदिएकी कन्या उसले विवाह गऱ्यो । आफूलाई मिल्ने र पढेको विषयमा नै उसले जागीर पनि पाएको थियो । नेपालमा अरूको अनुपातमा राम्रै तलब र सुविधा पाएको थियो । आफ्नै घरमा सुविधायुक्त बसाइ थियो र आफ्नै गाडी पनि थियो । केही वर्ष सेवा गरेपछि अझै बढी सुविधा र सुखको खोजीमा PR पाएर श्रीमती सहित Canada गयो । त्यहाँ पनि लामू सङ्घर्ष र परिश्रम गरेपछि Canadian Airlines मा आफ्नू पढाइ र योग्यता अनुसारको जागीर पाएको छ । कमाइ राम्रै होला । उसकी श्रीमतीले पनि B.Sc. Nursing गरेर राम्रै कमाइ गरेकी हुनुपर्छ । राम्रो आर्जन गरेर छोरा बुहारी दुवैजना बसेका छन् । उनीहरूको भविष्य सुखमय हओस् भनेर हामीहरू आशीर्वाद दिन्छौं ।

मैले आफ्नै र आफैंले जन्माएका तर अहिले विदेशमा

रहेका छोराहरूमा कान्छो छोरो श्रीसगुनका बारेमा हिजोको दैनिकीमा लेखिसकेको छु भने आजको दैनिकीमा जेठो छोरो श्रीसञ्जीवका बारेमा लेखेँ ।

हाम्रा जम्मा जन्मिएका ७ सन्तान हुन् । दुई जन्मिनेबित्तिकै गए । बाँकी ५ सन्तानमा २ छोरीहरू ३ छोराहरू छन् । म विद्यार्थी नै हुँदा सं. २०१६ साल मङ्सिरमा पहाडको घर रावालामीडाँडामा जन्मिएकी छोरी सरिताका २ छोरी र १ छोरा छन् । ज्वाईं सरकारको सहसचिवमा कार्यरत हुनुहुन्छ । सरिता पनि राम्रो विद्यालयमा काम गर्दथी । यसै बीचमा केही वर्ष अघि उसलाई अमेरिकाको DV पऱ्यो । परिवार सबै अमेरिका गएर छोराछोरीलाई उहीँ राखेर केही वर्षदेखि उनीहरूको आउने र जाने क्रम चलिरहेको छ ।

अर्को छोरा श्रीसतीशकुमार भट्टराई र कान्छी छोरी सविता नेपालमा छन् । सतीश श्रीमती र छोरीका साथ हाम्रै साथमा बसेको छ भने छोरी सविता श्रीमान् र दुई छोरीका साथ आनन्दले आफ्नै घरमा बसेकी छ ।

वृद्धावस्थामा हामीहरू एक्लै हुन्छौँ र सबै छोराछोरी बाहिर जान्छन् भन्ने त्रास पहिले पहिले लाग्थ्यो अब त्यो त्रास पनि हटेर गइसकेको छ । वस्तुतः यस संसारमा सबैले नै आफ्नै लागि अरूको माया गरेका हुन्छन् । केवल स्वार्थरहित भएर कसैले कसैसँग प्रेम गर्दैन । उपनिषद्ले यही कुरा भनेको छ । जस्तै –
*"न वा अरे पत्युः कामाय पतिः प्रियो भवति, आत्मनस्तु कामाय पतिः प्रियो भवति । आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मत्व्यो निदिध्यासितव्यः ।"* (बृ.उ. २।४।५)

अपराह्न ४ बजे घुम्न गयौँ र ५ बजे फर्केर आयौँ । त्यसबेला सगुन कामबाट घर आयो । पारिवारिक कुराकानी

गरियो। त्यसपछि आगामी नोमेम्बर ७ तारिख अर्थात् कार्तिक २१ गते काठमाडौं फर्कने हवाइजहाजको टीकट सगुनले कम्प्युटरबाट मिलायो। हिन्दीचलचित्र अदालत हेर्दै रातको भोजन गऱ्यौँ र राति ९ बजे सुत्न गयौँ।

आज २०६८ साल कार्तिक २ गते बुधबार सो अनुसार सन् २०११ अक्टोबर १९ तारिख हो। आज सधैँझैँ बिहान उठेर नित्यकर्म सकेर ९ बजे प्रातः भ्रमणमा गयौँ। १०:३० तिर घर फर्किएर हिजो लेख्न बाँकी दैनिकी लेखेँ। दिनको भोजन गरेपछि अहिले म आजको दैनिकी र मलाई लागेका कुराहरू लेख्छु। त्यसपछि मात्रै म अद्वैतसिद्धिको अनुवाद गर्नेछु।

हिजो र अस्ति मैले आफ्नू दैनिकीमा विदेशमा बसेका छोराछोरीहरूका बारेमा सङ्क्षिप्तमा लेखेँ। आजको दैनिकीमा मेरा दाजुका विदेशिएका छोराछोरीका बारेमा म लेख्तैछु। मेरा मातापिताबाट जन्मिएका १० सन्तानहरूमध्ये अहिले हामीहरू ३ दिदीबहिनी र दुई दाजुभाइ जीवित छौँ। यसबारेमा मैले मेरो जीवनयात्रा अनुस्मृतिमा विस्तारपूर्वक लेखिसकेको हुँदा यहाँ अरू विस्तार गर्नु आवश्यक ठान्दिन। दाजु श्रीपशुपति भट्टराईका दुई श्रीमतीहरूबाट जेठीबाट ४ भाइ छोरा १ बहिनी छोरी, कान्छी श्रीमतीबाट २ छोरी र १ छोरा जन्मिन गए। कान्छीपट्टिको छोरो प्रकाशले इन्जिनियरिङ विषयमा एम.ई. गऱ्यो र कान्छी छोरी कुमुदले एम.डी. गरी। उसका पति पनि डाक्टर भएकाले दुवैजना बेलायतमा गएर केही वर्षदेखि काम गरेर बसेका छन्। ससुरा सरकारको सचिवसम्म भएका सम्पन्न व्यक्ति छन्। सबै थोकमा सम्पन्न छन्। ती दुवै जनाले नेपालमा नै योग्यता अनुसारको जागीर पाएका थिए।

दाजुको छोरो प्रकाश आफ्नू योग्यता र क्षमता अनुसारको

सरकारी जागीर खाएर नेपालमा एक दशक जति बसेपछि उसलाई पनि बढी सुखसुविधाका लागि विदेश पलायन हुने रोगले सङ्क्रमण गऱ्यो। घरमा सुखसुविधा थियो। राम्रो घर, आम्दानी र इज्जत थियो। परिमित सरकारी काम गर्नुपर्दथ्यो। सर्वोच्च अदालतका न्यायाधीशकी छोरीसँग विवाह भएको थियो। जेठान र साला दुवै इन्जिनियर छन्। ससुरालीपट्टिबाट पनि ठूलो आड भरोसा प्राप्त थियो। यी सबै राम्रा कुरा हुँदाहुँदै पनि बढी कमाउने नाममा रोगी तथा वृद्धबाबु, राम्रो जागीर र आफ्नो अस्मितालाई परित्याग गरेर यहाँ अष्ट्रेलियामा आएर काम गरिरहेको छ। हामीहरू अष्ट्रेलिया आइपुगेकै दिन ऊ श्रीमतीलाई लिएर सगुनको घरमा भेट्न आयो। मैले नेपालबाट लिएर आएको मीठाइ कोसेली दिएँ। खुशी भयो। उसमा शिष्टता र संस्कार भएको मैले पाएँ। आउने बित्तिकै हामी दुवैजनालाई हामीहरूले नगर भन्दा भन्दै पनि निहुरिएर गोडामा ढोग्यो। आशीर्वाद लियो। मलाई यसबाट ठूलो सुखद आश्चर्य भयो र खुशी पनि लाग्यो। यस प्रकारको संस्कार र शिष्टता विदेशमा बस्ने सबै नेपाली युवायुवतीले प्रकाशबाट लाजै नमानीकन सिक्नु अति आवश्यक भएको मैले महसूस गरेको छु। शास्त्रमा लेखिएको पनि छ। जस्तै – अभिवादनशीलस्य नित्यं वृद्धोपसेविनः। चत्वारि तस्य वर्द्धन्ते आयुर्विद्ययशोबलम् ॥ (मनुस्मृति)

विजयादशमीको टीका र शुभाशीर्वाद लिन प्रकाश श्रीमतीसहित बिहानैदेखि आयो। टीकाटालापछि खाना, खेलबाड आदिमा उसले अत्यन्त उत्साहका साथ भाग लियो। उसको आग्रहमा हामीहरू सबैजना सगुनका गाडीद्वारा असोज २५ गते अक्टोबर १२ तारिखका दिन प्रकाशको वासस्थान

Harish Park मा गयौँ । उसको बसाइ पनि अरू यहाँ बस्ने नेपालीको जस्तै रहेछ, सामान्य, सफा र सुविधायुक्त । उसकी श्रीमती गर्भवती रहिछ । दोस्रो सन्तानको आगमन सायद निकट भविष्यमा नै हुँदैछ । सन्तानको अभिभारा उसलाई थपिँदै छ तर आर्जन एक्लैले गर्नुपर्ने । आफ्नू योग्यता अनुसारको काम उसले पाउन सकेको रहेनछ । खाने र बस्ने चटारो बोकेर बिहानदेखि बेलुकासम्म ऊ यन्त्रवत् दौडिरहेको छ, घोटिइरहेको छ र बाच्ने प्रयास गरिरहेछ । उसको इच्छा पूरा होस्, हाम्रो सधैँ उसलाई शुभाशीर्वाद छ । अरू दिनचर्या पूर्ववत् रह्यो ।

आज वि.सं. २०६८ साल कार्तिक ३ गते बुधबार अर्थात् सन् २०११ अक्टोबर २० तारिख हो । सबेरै उठेर नित्यकर्म सकेँ । रातमा अबेर सुतेकाले राम्रो निद्रा परेन । ८:४५ बजे घुम्न गयौँ । फर्किएपछि केरा, चिउरा र उसिनेको साग खाएँ । २०२६ सालमा राजकीय प्रज्ञा प्रतिष्ठानद्वारा ‘अधिकार र कर्तव्य’ भन्ने शीर्षकमा बृहत्कविसम्मेलनमा सर्वप्रथम भएर मैले प्राप्त गरेको अत्यन्त सुन्दर र आकर्षक २४ क्यारेटको शुद्ध अकबरी सुनको महत्त्वपूर्ण पदक मैले स्व. राजा महेन्द्रका हातबाट पाएको थिएँ । जसका बारेमा मैले मेरो जीवनी अनुस्मृतिमा तस्वीर सहित उल्लेख गरिसकेको छु । अरू पदक, अलङ्कार, विभूषण र तक्माहरू पनि मैले पाएको छु । ती सबैभन्दा मेरो यो प्रिय भएकाले प्रायः यो मसँगै रहन्छ । सो मैले यहाँ पनि लिएरै आएको थिएँ र छोरा सगुनलाई मैले त्यो देखाएँ । उसले अत्यन्त प्रभावित भएर बाबुको चिनोको रूपमा पछिसम्म राख्न चाहेको हुँदा म अत्यन्त खुशी भएर त्यो पदक सगुनलाई दिने भएको छु । छोराले

अत्यन्त प्रेमका साथ बाबुको चिनो मागेकोमा मलाई खुशी लागेको छ । ऊ कहिलेकाहीँ मसँग जङ्गिन्छ, रिसाउँछ र अशिष्टता प्रदर्शन गर्छ तापनि उसको रिस चाँडै सेलाउँछ, ठण्डा हुन्छ । ऊ पश्चात्ताप गर्न थाल्दछ । मेरो पनि स्वभाव त्यस्तै छ । त्यो सम्झेर पनि ऊसँग म चित्त दुखाउँदिन, मेरै स्वभाव सरेछ भनेर चित्त बुझाउँछु । ठण्डा भएपछि के खाने ? कहाँ जाने ? स्वास्थ्य कस्तो छ ? आदि कुरा सोधेर सेवा गर्दछ । कुनै कुरामा कञ्जुसी र लोभ गर्दैन । घरव्यवहारका सुखदुःखका कुरा गर्छ । आफ्नू भर्खरै ७ महिना पुगेको सानू छोराको भविष्यका बारेमा योजना बनाउँछ । उसलाई नेपालमा नै शिक्षादीक्षा दिने र आफू पनि अन्त्यमा नेपालमा नै बस्ने, यहाँ नबस्ने भनेर सुनाउँछ । यसप्रकारको उसको भावना र चाहना देखेर हामी बाबुआमा अत्यन्त खुशी हुन्छौँ । अहिलेसम्म तीनभाई छोराहरूको त्यही एउटा सानू वंशवृक्ष जन्मेको छ । सबैको स्नेहभाव छ । बूढेसकालको हाम्रो सहारा हुन्छ कि भनेर हामीहरूलाई आशा लाग्दछ । यिनै अत्यन्त संवेदनशील, व्यावहारिक र मानवीय गुणाका कारण उसका सबै गल्ती म बिर्सिदिन्छु । उसले भनेका कुराहरू म सहर्ष स्वीकार गरिदिन्छु । उसले १८ वर्ष अघि घरबाट अष्ट्रेलिया पढ्न हिँडेदेखि अहिलेसम्म मसँग केही मागेको छैन । ऊ स्वाभिमानी र स्वावलम्बी छ । ऊ दिन मात्रै जान्दछ, लिन जान्दैन । अरू छोराहरूलाई दिए सरह मैले उसलाई अंश दिएको छु । अरू केही दिएको छैन । ऊ माग्दैन र आफ्नू दुःख देखाउँदैन पनि । यस्तो छोराले मेरो सानू चिनो लिने इच्छा गर्दा म कसरी आफूलाई रोकौँ र नदिऊँ । मेरा अरू दुईभाइ छोराहरूले पनि मसँग यस्तै

व्यवहार गरून् भन्ने म चाहन्छु ।

आज पनि गत केही दिनदेखि लेख्ने गरेको क्रमलाई म अघि बढाउँछु । हाम्रा मातापिताबाट जन्मिएका आजसम्म जीवित रहेका तीन ओटी दिदी बहिनी र हामी दुई दाजुभाइ भएको कुरा माथि नै लेखिसकेको छु । ठूली दिदीका ६ भाइ छोरा र ४ बहिनी छोरी गरेर १० जना सन्तान जीवित छन् । माहिली बहिनीका ३ भाइ छोरा र ४ बहिनी छोरी जीवित छन् । कान्छी बहिनीका २ भाइ छोरा र ३ बहिनी छोरीहरू छन् । जम्मा गरेर हाम्रा भानिज ११ र भान्जीहरू ११ गरेर २२ जना छन् । हामी दाजुभाइतर्फ दाजुका दुवै श्रीमतीहरूबाट जेठीबाट ४ भाइ छोरा र छोरी १ गरेर ५ जना छन् भने कान्छीबाट १ छोरो र २ छोरी छन् । मेरा ३ छोरा र दुई छोरीहरू छन् । सबै मिलाउँदा छोराहरू ८ र छोरी ५ गरी १३ जना हुन आउँछन् । यिनीहरू मध्ये ३ छोराहरू र दुई छोरीहरू हाल विदेशमा भएको कुरा प्रसङ्ग अनुसार माथि उल्लेख गरिसकेँ । भानिजतर्फ अहिलेसम्म ठूली दिदीका काइँला छोरा DV परेर अमेरिका गएका छन् । यहाँ दुःखै गरेर हुर्किएका हुँदा त्यहाँ गएर राम्रै गरेका होलान् भन्ने ठान्दछु । उनी हाम्रा सम्पर्क बाहिरै रहेकाले केही विशेष जानकारी छैन ।

हाम्रा छोराछोरी पछि नातितर्फ दाजुको जेठीपट्टिको जेठो छोरो अर्थात् कुमारको एकमात्र छोरो धीरज केही वर्षदेखि यहीं अष्ट्रेलियाको सिड्नी शहरको कुनै भागमा काम गरिरहेको छ अरे । यहाँ सगुनसँग र प्रकाशसँग शुरुमा सम्पर्क थियो अरे तर अहिले भने सबैसँग सम्बन्ध विच्छेद गरेर बसेको रहेछ । तिहारमा उसलाई बोलाउन सगुनलाई भनेको छु,

सायद आउला ।

दैनिकी लेखेपछि मैले अद्वैतसिद्धिको केही अनुवाद गरेँ र ४ बजेपछि घुम्न गएँ । फर्केर आएपछि पूर्ववत् दिन बित्यो । खाना खाएपछि ९ बजे सुत्न गएँ ।

आज २०६८ साल कार्तिक ४ गते शुक्रबार सन् २०११ अक्टोबर २१ तारिख हो। बिहानै उठेर नित्यकर्म सकेर स्वल्पाहार लिएँ। हिजो बेलुका धेरैबेर हिँडेको हुँदा मेरी श्रीमती इन्दिरा घुम्न जान नसकेकी हुँदा म एक्लै घुम्न गएँ र १० बजे नै घर फर्किएँ। नाति सुदीप केही बेरामी भएकाले बुहारी पूजा डाक्टरकहाँ गई । मैले Flemington Railway Station सम्म पुऱ्याएर फर्किएँ। दिनको भोजन लिएर अहिले म दैनिकी लेख्तैछु। श्रीमती बैठकमा बसेर अमिताभ बच्चनका हिन्दीचलचित्र शक्ति र हम हेरिरहेकी छ। अब म अद्वैतसिद्धितर्फ हात बढाउने छु ।

यहाँ आएर परिवारसहित बस्नेमा मावली भतिजो ध्रुव दाहाल पनि छ। जसका बारेमा मिति २०६८ साल असोज २७ गते शुक्रबार अर्थात् सन् २०११ अक्टोबर १४ को दैनिकीमा मैले केही उल्लेख गरिसकेको छु। साँझ पैदलै छोरा बुहारी र नाति सुदीपसँग घुम्न गयौँ। त्यस बेला प्रा. अच्युत रमण अधिकारी श्रीमती, छोरो सन्तोषरमण अधिकारी र बुहारी वन्दना सहित हामीहरूलाई भेट्न घरमा आएर अत्यन्त पारिवारिक वातावरणमा कुराकानी भयो। उनीहरू ८:३० बजे गए। सन्तोष र वन्दना हाल Sydney को Plumton भन्ने ठाउँमा घर किनेर बसेका रहेछन्। ५ वर्ष अघि श्रीमती वन्दना अध्ययनका लागि Australia आएकी रहिछन्। उनका श्रीमान् सन्तोष आश्रित Dependent भएर आएका रहेछन्। उनीहरूले

छोटो अवधिमा PR पाएछन् । दुवैजना हाल काम गर्दारहेछन् । कामको प्रकृति यहाँ बस्ने अरू नेपालीका सरह नै रहेछ । अच्युतदम्पती उनिहरूकै निम्तोमा यहाँ आएका रहेछन् । ६ महिनापछि नेपाल फर्कने बुझियो । अरू विवरण आगामी दैनिकीमा लेख्ने छु ।

आज २०६८ साल कार्तिक ५ गते शनिबार सो अनुसार सन् २०११ अक्टोबर २२ तारिख हो । प्रातःकर्म पहिलेकै अनुसार गरेँ । दाजुको नाति कुमारको छोरो धीरजलाई टेलिफोन गरेर खोजेपछि आज बिहानै आइपुग्यो । राम्रै काम पाएको रहेछ र कलेजमा पढ्दै पनि रहेछ । कुराकानी गर्दा प्रगति गर्ने जस्तो मलाई लाग्यो । Sydney Market मा अष्ट्रेलियनको फलफूलको थोक व्यापारीको कार्यालयमा बसेर लेखापढीको काम गर्दोरहेछ । आम्दानी राम्रो रहेछ । बिहान १० बजेतिर धीरजलाई लिएर उसको कार्यस्थल Sydney Market मा सर्वप्रथम गएँ । त्यहाँ एउटा लठ्ठी उसले मलाई किनिदियो । त्यसपछि उसले राम्रो पसल DFO भन्ने Department Store मा लगेर स्वेटर किनिदियो । म घर आउँदा घरमा सगुनको साथी दीपक, उनकी श्रीमती र छोरी दीपासा समेत आएका रहेछन् । आज शनिबार छुट्टीको दिन भएकाले सगुन र पूजाले शाकाहारी मम बनाएका रहेछन् । दिनको खानाका रूपमा सबैले त्यही खायौँ । खानापछि आएका पाहुनाहरू गए । छोरा, बुहारी र नाति सुदीप धीरजलाई लिएर घुम्न गएका छन् । म अहिले दैनिकी र अद्वैतसिद्धिको लेखन गरिरहेको छु । अपराह्न लिडकमबाट वसन्त आयो । उसको जीनासँग विवाह गर्ने


Sydney Market मा धीरज

सम्बन्धमा सल्लाह भयो। रातको खानापछि वसन्त घर लिडकम गयो। हामी सुत्यौ।

२०६८ साल कार्तिक ६ गते आइतबार हो। अङ्ग्रेजी वर्ष अनुसार आज सन् २०११ अक्टोबर २३ तारिख हो। आज सधैँझैँ बिहानको नित्यकर्म सकेर १० बजेतिर घुम्न गइयो। कार्तिक २१ गते सोमबार तदनुसार नोभेम्बर ७ तारिखका दिन काठमाडौं घर फर्कंदा आफन्तहरूलाई केही उपहार दिन केही उपहार किनेर ११ बजे घर फर्कियौँ। आज एकादशी भएकाले फलाहारी भइयो। त्यसपछि आरामीका साथ दैनिकी सङ्क्षिप्तरूपमा लेखेँ। अब अद्वैतसिद्धिको अनुवाद गर्नेछु।

अष्ट्रेलियामा बस्ने नेपालीहरू हाल २५ हजार जति भएछन्। म धेरैलाई चिन्दिन र चिने पनि टेलिफोन बाहेक आमने सामने भेटेर भलाकुसारी गर्ने सम्भावना अत्यन्त कम रहेछ। यहाँ हाल बसिरहेका मसँग सम्बन्धित र निकट सम्बन्ध भएका केही नेपालीका बारेमा मैले केही टिप्पणी गरिसकेको छु। आज भतिजो प्रकाशका जेठान पङ्कज कोइराला र साला सन्दीप कोइरालाका सम्बन्धमा केही उल्लेख गर्दछु। उनीहरूका पिता राजेन्द्र कोइरालासँग परिचय भए पनि छोराहरू दुवैलाई म व्यक्तिगत रूपमा चिन्दिनथेँ। केवल प्रकाशबाट उनीहरूका बारेमा



पङ्कज श्रीमती, छोरी, भाइ, भान्जी, सगुन, पूजा र सुदीपका साथ

मैले सुनेको थिएँ। दुवैजना इञ्जिनियर हुन् अरे। उनीहरू दुवैजना परिवार सहित ह्यारिश पार्कमा प्रकाश साथसाथै बस्तछन् भन्ने सुनेको छु। सर्वोच्च अदालतका न्यायाधीशका छोरा घरका सम्पन्न भए पनि यहाँ सङ्घर्ष गरेर बाँच्नु र

भविष्यमा केही गर्न चाहनु जिजीविषा र ऊर्ध्वगामी चाहनाको परिचायक हो । यो लेख्तालेख्तै प्रकाश र पङ्कजको परिवार अपराह्न हामीहरूका घरमा आउने खबर आयो । आज निकै गर्मी बढेका कारण सायंभ्रमणमा हामीहरू साँझ ५ बजे मात्रै गयौँ र ६ बजे नै घरमा फर्कियौँ । प्रकाश, उसकी श्रीमती सजीता र छोरी श्रेयसाका साथ आए । साथसाथै प्रकाशका जेठान पनि श्रीमती ज्योति र छोरी श्रियालाई लिएर आए । चिनाजान र भलाकुसारी भयो, खुशिलाग्यो । पङ्कज, श्रीमती ज्योति, पङ्कजका भाइ सन्दीप र प्रकाशहरू एकै ठाउँमा काम गर्दा रहेछन् । सन्दीपकी श्रीमती कञ्चन अन्यत्र नै काम गर्दिरहिछन् । सबैजना आफ्नू क्षमता अनुसार आर्जन गर्दा रहेछन् । अत्यन्त स्वावलम्बी भएर अरू यहाँ बस्ने नेपाली जस्तै सबैसँग मिलेर हाँसीखुशीका साथ बसेका रहेछन् । उनीहरू भेटघाटका साथै दिदी श्रेयसा र श्रियाका तर्फबाट हाम्रो नाति सुदीपलाई भाइटीकाको निम्तो गर्न आएका रहेछन् । अहिलेसम्म प्रकाशकी एउटी छोरी श्रेयसा र पङ्कजकी पनि एउटी मात्र छोरी श्रिया भएका हुँदा सुदीपलाई भाइका रूपमा उनीहरूले भाइटीकामा टीका लगाइदिने भएका रहेछन् । अत्यन्त प्रेम र सौहार्दता देखेर आनन्द लाग्यो । गत वर्ष २०६७ साल फागुन २२ गते यहीँ जन्मिएको नाति भर्खर ८ महिना लागेको छ । गत श्रावण ३० गते २०६८ सालमा काठमाडौँको घरमा सुदीपको पास्नी अत्यन्त उमङ्गले भव्य तरिकाले शास्त्रीय विधिविधानका साथ गरिएको थियो । उसले भाइटीकाको टीका यो प्रथम पटक लगाउन लागेकाले पनि सबैमा उत्साह छाएको छ । यहाँ बस्ने सगुनका केही अरू साथीहरू राजेश, दीपक आदिका पनि छोरी मात्रै रहेछन् ।

त्यसैकारणले पनि सुदीप सबैको प्यारो र सबैको स्नेहभाजन भएको छ ।

यसपालीको भाइटीका २०६८ साल कार्तिक ११ गते तदनुसार सन् २०११ अक्टोबर २८ तारिखमा पर्नेरहेछ । यहाँ बस्ने नेपालीहरूले नेपालमा जस्तै दशैँ, तिहार, तीज आदि धार्मिक चाडपर्वहरू अत्यन्त श्रद्धाका साथ भव्यतापूर्वक सबैजना मिलिजुली मनाएको देख्ता साह्है खुशी लाग्यो । आफ्नू संस्कार र संस्कृतिलाई जोगाएर राखेमा नै आफ्नू पहिचान र अस्तित्व जोगिन्छ भन्ने कुरा बुझेको मैले देखेँ ।

आएका पाहुनाहरूसँग धेरैबेर कुराकानी र सौहार्दपूर्णरूपमा वार्तालाप गर्‍यौँ । रातको ८:३० बजे उनीहरूलाई उनीहरूका आवासमा पुर्‍याउन सगुन गयो र ९ बजे घर फर्कियो । राति ९ बजे रातको खाना खाएर हामीहरू सुत्यौँ ।

आज २०६८ साल कार्तिक ७ गते सोमबार तदनुसार सन् २०११ अक्टोबर २४ तारिख हो । आज केही चाँडै नित्यकर्म सिध्याएर ९ बजेतिर बाहिर घुम्न गयौँ । अत्यन्त प्रचण्ड सूर्यको प्रखर ताप बिहानैदेखि फैलिएकाले अत्यन्त गर्मी थियो । एक घण्टामात्र घुमेर १० बजे नै घर फर्कियौँ । घर आएपछि मैले हरिकृष्ण पन्तको छोरा महेश पन्तलाई फोन गरेँ । उसले भेट्न खोजेको थियो । महेशले टेलिफोन नउठाएर उसकी श्रीमती ऋतुले उठाइन् र कुराकानी भयो । महेश काममा गएकाले कुरा हुनसकेन । उनीहरू सिड्नी अन्तरगत 7/14, Short Street Wentworth Ville मा घर किनेर बसेकारहेछन् । श्रीमान् र श्रीमती दुवै जना काम गरेर आनन्दपूर्वक बसेका रहेछन् ।

दिनको भोजनपछि मैले प्रा. अच्युतरमण अधिकारीलाई

आगामी शनिबारको कार्यक्रम मिलाउने सम्बन्धमा कुरा गरैं । उनी पत्नीसहित हाल छोरा सन्तोषका घरमा केही महिनादेखि प्लम्पटन, सिड्नीमा बस्तारहेछन् । यो कुरा मैले मिति २०६८ साल कार्तिक ४ गतेको दैनिकीमा पनि सङ्क्षिप्तरूपमा चर्चा गरिसकेको छु ।

खाना खाएपछि दैनिकी लेखैं र अद्वैतसिद्धिको अनुवाद गरैं । यसै बीचमा हाल सिड्नीको प्लम्टनमा छोराका घरमा बसिरहेका प्रा. अच्युतरमण अधिकारीसँग आगामी शनिबार उनका निवासस्थानमा जान उनका छोरा बुहारीले यहाँ आउँदा दिएका आमन्त्रणका बारेमा सल्लाह गरैं । छोरा र बुहारी काममा गएका हुँदा निश्चित भएन । निश्चित भएमा मात्र जाइनेछ । बाहिर दिनमा उग्र गर्मी हुने भएकाले साँझ परेपछिमात्रै जाने निश्चय गर्‍यौं । आज अलिक चाँडै सगुन कामबाट घर आयो । बुहारी पूजाका दाजु शेखर दाहाल र उनकी श्रीमती विनीता पनि सिड्नीमा भएकाले भाइटीकाको निम्तो दिन ५:३० बजे छोरो, बुहारी र नाति तीनैजना ससुराली गए । हामीहरू पनि सायंभ्रमणमा गयौं । ७ बजे घर फर्कियौं र सधैंको जस्तै रातमा टी.भी. र हिन्दीचलचित्र हेर्‍यौं । ८ बजे रातको भोजन गरेर ९ बजे सधैं जस्तो निद्रादेवीको शरणमा गयौं ।

२०६८ कार्तिक ८ गते मङ्गलबार हो । अर्कोतर्फ सन् २०११ अक्टोबर २५ तारिख हो । आज बिहान ६ बजे म उठैं । शरीर केही भारी र दु:खेको थियो । अलि अलि रिङटा लागेकाले रक्तचाप बढ्यो कि ! भनेर नियमित औषधि Amtas AT र Repece H खाएँ । प्रेसर तुरुन्तै घटाउन सधैंजस्तो तीतो करेलो पनि खाएँ । त्यसपछि स्नान, सन्ध्या

वन्दनादि, पितृतर्पण गरेँ । सधैँजस्तो आज पनि शुक्लयजुर्वेदका २ मन्त्र, श्रीमद्भगवद्गीता १ अध्याय र श्रीमद्भागवत-महापुराणको १ अध्याय पाठ गरेँ । नेपालमा गरेजस्तै यहाँ पनि पाञ्चायन पूजा म गर्न चाहन्थेँ, तर सिड्नी आइपुग्ने बेलामा जाँचको डरले मैले दशैँमा जमरा राख्न ल्याएको नयाँ जौ, अवीर र तुलसीपत्र हवाइजहाजमा विसर्जन गर्दा शालिग्राम पनि साथै विसर्जन गल्तिले गरिएछ । त्यसकारण यहाँ मैले पूजा गर्न पाइन । यसबाट म यति विघ्न दुःखी भएको छु कि म सपनामा पनि यहाँ मैले हवाइजहाजमा भूलवश हराएको शालिग्राम भेटेको सपना देख्तछु । यसैले गर्दा गृहस्थले नित्यकर्मका रूपमा बिहानै गर्ने पञ्चयज्ञ मैले गर्न सकिन । परदेशमा भएकाले गर्न नसकेको भनेर मैले सम्झिएको छु । भनिएको पनि छ – 'पथि शूद्रवताचरेत् ।' आज पाठ गर्दा मैले शुक्लयजुर्वेदको दोस्रो अध्यायका २९ र ३० औँ मन्त्रको पाठ गरेँ, श्रीमद्भगवद्गीताको बाह्रौँ अध्याय र श्रीमद्भागवत महापुराणको दशमस्कन्ध पूर्वार्धको सातौँ अध्यायको पाठ गरेँ । त्यसपछि केही विसञ्चो भए पनि श्रीमतीलाई लिएर प्रातःभ्रमणमा गएँ । हिजो र अस्ति यहाँ चर्किएको प्रचण्ड तथा प्रखर घामको ताप सम्झिएर पातला लुगा लगाएर गएँ । तर रातभरि पानी परेको र बिहान पनि बतास सहितको सिमसिमे पानी परिरहेको थाहै भएन । अत्यन्त जाडो भएकाले ९ बजे नै घर फर्कियौँ । अलिनो खाना खाएर म अहिले दैनिकी र अद्वैतसिद्धिको अनुवाद तर्फ लागेको छु । अहिले श्रीमती इन्दिरा दिलीपकुमार, अमिताभ वच्चन, राखी र स्मितापाटिल आदिले अभिनय गरेको शक्ति हिन्दीचलचित्र हेरिरहेकी छन् । लेख्न अल्छी लागेको बेलामा म पनि बेला

बेलामा गएर हेर्न साथ दिन्छु । धेरै पहिले यो चलचित्र मैले प्र.जि.अ. हुँदा सेन्सर गर्ने क्रममा पाल्पामा हेरेको थिएँ । त्यसबेला मैले यसको कहानीतर्फ ध्यान दिएको रहेनछु । अहिले यस उमेरमा सबैकुराबाट निवृत्त भएर केही पारिवारिक अनुभवलाई पनि अनुभूत गरेर घरबाट धेरै टाढा एकान्तमा बसेर हेर्दा केही बुझेको छु । शक्तिमा कहानीकारले परिवारका बाबु, आमा र छोराका बीचको अत्यन्त संवेदनपूर्ण त्रिकोणात्मक सम्बन्ध, बाबुले नचाहँदा नचाहँदै पनि कर्तव्यका कारणले पर्नगएको परिवन्दात्मक असमझदारी र अन्त्यमा पर्न गएको दुर्दान्त वियोगान्त परिणतिले जुनसुकै पनि संवेदनशील सहृदयीलाई नछोइछोड्दैन । वास्तवमा यस्ता घटना प्रत्येक गृहस्थ परिवारमा प्रकारान्तरले वा हुबहु सृष्टिको प्रथम प्रभातदेखि लिएर प्रलयकालसम्म भइरहने शाश्वत घटनाहरू हुन् । वास्तवमा यसलाई सार्वकालिक, सार्वदेशिक र शाश्वत भन्नु कुनै अत्युक्ति मानिने छैन । भर्सक यस्तो नहओस् भनेर परिवारका सबै सदस्यहरूले होस पुऱ्याउनु भने अवश्य नै पर्दछ । लेख्ने काम सकेपछि खाजा खायौँ । सगुन कामबाट फर्किएपछि पनि पानी परिरहेकै थियो । पानी पर्दापर्दै पनि ५:३० तिर म एक्लै छाता ओडेर घुम्न गएँ । बतास र पानीले गर्दा घुम्न सकिएन । चाँडै फर्किएर घर आएँ । हामी आएदेखि नै यहाँ प्रायः पानी परिरहेको छ । आउने शनिबारसम्म पानी पर्ने भविष्यवाणी भएको छ । यसपालाको यहाँको दशैँतिहारमा झरी पर्ने भयो । यहाँ गर्मी हुँदा अत्यन्त उग्र गर्मी र जाडोहुँदा पनि उग्र नै हुँदोरहेछ ।

यहाँका बोटविरुवाफूलहरू केही मात्र नेपालका जस्ता हुँदा रहेछन् । जसमा मसला, काइँयो, अम्बा आदि । फूलमा

गुलाफ, चमेली, जुही, इन्द्रकमल आदि। नेपालमा पाइने फलफूल र तरकारी सबै पाइँदा रहेछन्। केवल पर्वर र चौँसूर भने देखिएन। चराहरूमा परेवा, कोइली, ढुकुर, सारौँ, जुरेली, परेवाजस्ता केही उस्तै रूपरङ्गका र बोली पनि उस्तै हुँदा रहेछन्। यहाँ काग सेतो र कालो रङ मिसिएको छिर्बिरे हुँदोरहेछ। कराउँदा पाडो कराएझैँ गरेर कराउँदोरहेछ। कोइली पनि कराउँदा उस्तै सुनिए पनि कागजस्तै छिर्केमिर्के हुँदोरहेछ। अरू वनैया चराचुरुङ्गी फरक देखिए। यहाँका नाम चलेका जनाबरमा कङ्गारु, क्वाला, डिङ्गो आदि रहेछन्। नउड्ने चरामा इमु रहेछ। हाम्रा घर वरिपरि रुखैरुख भएर सुन्दर हरियाली भएको हुँदा विभिन्न चराचुरुङ्गीले गुँड बनाएर वस्ता रहेछन्। तिनीहरूको विभिन्न आवाज र कलरव सुन्न पाइन्छ। तीमध्ये एउटा चरो म सुत्ने कोठाको नजिकैको रुखमा बसेर सुरिलो र अत्यन्त सङ्गीतपूर्ण मधुर बोली बोलेर मलाई सधैँ प्रभाती सुनाउँने गर्दछ। त्यो चरो कस्तो रहेछ भनेर हेर्न खोज्दा ऊ अन्तर्धान भइसकेको हुन्छ। त्यसबेला कठमाडौँमा मेरो घरको रुखमा बिहानै आएर मधुरिमापूर्ण गीत गाएर मलाई ओछ्यानबाट उठाउने धोबिनी चराको मलाई सम्झना आउने गर्दछ। धोविनी चराको सम्झनामा मैले मेरो "विविध यात्रा कवितासङ्ग्रह २०५५" मा 'धोबिनी चरी' शीर्षक राखेर कविता प्रकाशन गरिसकेकोछु। आज बिहानैदेखि बताससहितको पानी परिरहेकाले सगुन कामबाट फर्किएपछि ५:३० बजेपछिमात्रै श्रीमतीले अल्छी मानेकीले छाता लिएर म एक्लै नै घुम्न बाहिर सडकमा निस्किएँ। यहाँका सडकहरूमा मानिसहरू कम हिड्ने, हिंडेका मध्ये पनि आक्कलझुक्कल बाहेक चिनेका

मान्छे नभेटिने हुँदा घुम्न रमाइलो छ । शान्त, सफा, सुन्दर, हरिया बोटबिरुवा भएको र प्रदूषणमुक्त भएकाले अत्यन्त स्वच्छ, स्वस्थ र रमाइलो वातावरणमा घुम्न पाइन्छ । त्यतिमात्रै नभएर योजनाबद्ध तरिकाले बनेका सफा सडक, घर र विद्यालयहरू छन् । शिशुसह्यार केन्द्र Child Care Centre व्यवस्थित रूपमा जताततै सुलभ छन् । अस्पताल, स्वास्थ्यकेन्द्र, औषधिपसल र सुव्यवस्थित सबै प्रकारका पसलहरू छन् । हाम्रो घरको नजिकै २४ घण्टै चल्ने Local train र Express train को बटो पनि छ । बस र टयाक्सी अत्यन्त सुव्यवस्थितरूपमा सञ्चालित छन् । घरका वरिपरि नै ठूला ठूला Park, बगैँचा र खेलका मैदानहरू छन् । यसप्रकारको भौतिक सुविधाका साथै बाहिरी अरू देशहरूबाट आएका मान्छेहरूले पनि यस देशका नागरिक सरह नै योग्यता र क्षमता अनुसारको काम पाउँदा रहेछन् । स्वास्थ्यसेवा र शिक्षा पूर्णरूपमा निःशुल्क उपलब्ध छन् । अरू पनि धेरै सुविधा र सुरक्षा यस देशम पाइने हुँदा हाम्रा नेपालजस्ता विकासोन्मुख देशहरूबाट आएका नागरिकहरू प्रायशः यहाँ आएपछि फर्किन चाहँदा रहेनछन् । बाहिरबाट चाँडै फर्किएँ । टी.भी. चलचित्र र रातको खानापछि ९ बजे नै सुतियो ।

आज वि.सं. २०६८ साल कार्तिक ९ गते बुधबार हो । अक्टोबरको २६ तारिख । सधैँझैँ म आज उठ्न चाहिन किनभने बाहिर पानी परेको र सिरसिर हावा चलेकाले वातावरण अत्यन्त चिसो भएको छ । ७:१५ मा उठेर मैले गर्ने प्रातःकृत्य समाप्त गरेर हामीहरू छाता बोकेर सधैँझैँ मन्दिर सोझै गयौँ । मन्दिरनिर एकजना नेपाली युवक भेटिए । परिचय भयो । उनी पूर्वी नेपाल झापाजिल्ला सुरुङ्गा निवासी

सीताराम उप्रेतीका छोरा पङ्कज उप्रेती रहेछन् । उनी यहाँ ८ वर्षदेखि परिवार सहित यसै East Bourne Road Home Bush मा सगुनका घरका सोझै पश्चिम सडक पारि बस्तारहेछन् । घुमेर ११ बजे फर्कियौँ । दिनको भोजनपछि केही बेर हिन्दीचलचित्र दोस्त हेरेँ । अहिले दैनिकी लेख्तै छु । अब BBC Nepali Sewa सुन्छु र त्यसपछि अद्वैतसिद्धिको तृतीय मिथ्यात्वसिद्धिको अनुवाद गर्नेछु ।

खाजा खाएपछि ४ बजे सायंभ्रमणमा गयौँ र ५ बजे घर फर्कियौँ । लक्ष्मीपूजामा सम्मिलित हुन दाजुको नाति धीरज आइपुग्यो र त्यसपछि सगुन कामबाट आयो । लक्ष्मीपूजाको तयारी हुँदाहुँदै पूजाका दाजु शेखर र भाउजू विनीता आए । उनीहरूकै साथमा पूजाका मामाका छोरा प्रमोद र उनको साथी सुनसरी निवासी नीरज पनि आए । त्यसपछि बत्ती बाल्ने काम शुरु भयो । मोमबत्ती र विजुलीका झिलमिले बत्तीले झलझलाकार भएपछि ७ बजेपछि मैले श्रीमती इन्दिरा र बुहारी पूजाका हातबाट सङ्क्षिप्तरूपमा लक्ष्मीको पूजा गराएँ । भव्यरूपमा सिँगारिएको मण्डपमा पूजा सकेर सबैले टीकाप्रसाद ग्रहण गर्‍यौँ । नाति सुदीपको उपस्थितिमा प्रथम लक्ष्मीपूजा भएकाले अत्यन्त रमाइलो भयो । त्यतिमात्रै नभएर अष्ट्रेलियाजस्तो महासमुद्र पारिको विकसित देशमा भेलाभएर तीनपुस्ता सम्मिलित हामीहरूले मनाएको दशैँ र तिहार पनि यो पहिलो पटक नै हो । यसरी मनाउनु ‘न भूतो न भविष्यति’ भन्ने मैले सम्झिएको छु । खानापछि सम्मिलित पाहुनाहरूसमेत भएर केही बेर खेलबाड चल्यो । ८:३० बजे सबैलाई बिदा गर्न छोरो सगुन गाडी लिएर गयो । हामीहरू सधैँजस्तो निद्रादेवीका शरणमा गयौँ ।

आज संवत् २०६८ साल कार्तिक १० गते बृहस्पतिबार तदनुसार सन् २०११ अक्टोबर २७ तारिख हो । आज गोवर्धन र हलीपूजाको दिन हो । यहाँ आज खास कुनै पूजाको कार्यक्रम छैन । बिहान हिजोअस्तिजस्तै सबेरै उठेर नित्यकर्म समाप्त गरेर घुम्न निस्कियौँ । फर्किएपछि दिनको भोजन भयो । त्यसपछि अहिले यहीँ आउनुभएका प्रा. अच्युतरमणका निम्तामा उनका छोरा सन्तोषको घर पर्सी शनिबार जाने कार्यक्रम मिलाउन अच्युतजीसँग कुरा गरेँ । मैले उनको घरको ठेगाना थाहा नपाएको हुँदा उनका छोरासँग ठेगाना मागेँ । उनले SMS द्वारा Address भर्खरै पठाए । जुन यस्तो छ – Lapwing Way, Plumton, NSW 2761 यो ठेगाना लिएपछि म अहिले ढुक्क भएर मेरो दैनिन्दिनी लेख्तैछु । त्यसपछि अद्वैतसिद्धिको अनुवाद गरेँ । दिनको खाजा खाएर घुम्न गयौँ । फर्कँदा भाइटीकाका लागि आवश्यक फूल बुहारी पूजाका लागि सडक छेउमा फुलेका गुलाफ समेतका थरीथरीका फूलहरू टिपेर ल्यायौँ । मैले यहाँको चलन शुरुमा थाहा नपाएकाले सडकका छेउमा फुलेको फूल ल्याउन डराउथेँ । तर घरका कम्पाउण्डभन्दा बाहिर निस्केका र बाहिर फुलेका फूलहरू ल्याउन हुन्छ भनेर सगुनले भनेकाले ल्याएको हुँ । यहाँ आफ्नू घरमा फूल लगाउने बारी नभएकाले पनि यसो गर्नुपरेको हो । यहाँ हाम्रा परम्पराका सयपत्री, मखमली, गोदाबरी जस्ता फूलहरू नपाइने र नेपालमा जस्तो बजारमा किन्न पनि नपाइने भएकाले फूलमालाको अनिकाल पर्दोरहेछ । यसरी फूल टिप्तै ५ बजे घर फर्कियौँ । सगुन पनि कामबाट फर्कियो । भोलि भाइटीका भएकाले काठमाडौं र इनरुवा सुनसरीमा फोन गरेँ । बहिनी तारा, सीता र दिदी रमालाई टेलिफोनबाटै

शुभकामना दिएँ । सतीश र सवितासँग पनि फोन भयो । बेलुका र रातमा पनि पहिले जस्तै टेलिभिजन र चलचित्र हेर्ने काम भयो । रात परेपछि म पढ्न र लेख्न आँखाका कारणले नसक्ने भएकाले समय बिताउन बाध्य भएर हेर्नुपर्ने हुन्छ । बाहिर हिंड्दा प्रायः SD मा नेपालबाटै भरेर ल्याएका भागवतका सुन्दर श्लोकहरू र रजनीशका प्रवचनहरू सुन्नेगर्दछु । रातको भोजनपछि सुतियो ।

आज २०६८ साल कार्तिक ११ गते शुक्रबार हो । अङ्ग्रेजी दिन अनुसार २०११ अक्टोबर २८ तारिख हो । आज भाइटीकाको दिन हो । यहाँ दिदी बहिनी कोही पनि नभएकाले दिक्क हुँदै खाली निदार बस्नु परेको छ । हिजो दाजुलाई काठमाडौंमा टेलिफोन गरैँ, सञ्चै रहेछ । बिहानको नित्यकर्म सकेर स्वल्पाहारपछि घुम्न गइयो । फर्किंदा भाइटीकाका लागि हिजोजस्तै फूल टिपेर ल्यायौँ । घर फर्केपछि क्यानाडामा छोरा सञ्जीव र बुहारी सुषमासँग कुरा गरैँ र आशीर्वाद शुभकामना दिएँ । त्यसपछि अमेरिकामा फोन गरेर छोरी सरितालाई शुभाशीर्वाद शुभकामना दिएँ । अहिले बुहारी पूजाका दाजु शेखर, भाउजू विनीता र उनको मामाका छोरा प्रमोद टीका लाउन आए र टीका लगाउने काम विधिपूर्वक सम्पन्न भयो । भाइटीकापछि दैनन्दिनि र अद्वैतसिद्धि लेख्ने काम भयो । मिथ्यात्वविचारको तेस्रो विचार सकियो । सगुन ४:३० बजे फर्किएपछि हामीहरू ५:३० म नाति सुदीपलाई प्रकाशकी छोरी श्रेयसा र पङ्कजकी छोरी श्रियाका हातबाट टीका लगाउन प्रकाशको निवास ह्यारिशवर्ग गयौँ । टीकापछि केहीबेर खेलबाड


भाइटीका लगाउँदै नाति

भयो। रातको भोजनपछि हामीहरू १० बजे घर फर्कियौँ र आराम गऱ्यौँ।

आज सं. २०६८ साल कार्तिक १२ गते शनिबार तदनुसार सन् २०११ अक्टोबर २९ तारिख हो। आज पनि म सबेरै उठेर पूर्ववत् कृत्यहरू गरेँ। आज पनि सबेरै एउटा चरो घरका नजिकैको रुखमा बसेर उठ हे उठ ! सुन रे सुन !! भनेर अत्यन्त मधुर स्वरमा मलाई उठाइरहेको छ। केही परको रुखमा कोइली बोलिरहेको छ। यी चराहरू हामीहरू यहाँ आएदेखि नै हाम्रो नजिकै गीत गाइरहन्छन्। मलाई अत्यन्त प्रिय लाग्दछ। ९ बजे प्रातःभ्रमणमा गयौँ र ११ बजे फर्कियौँ। हामीलाई भेट्न सम्धी न्यायाधीश श्रीकृष्णप्रसाद उपाध्यायका छोरा सन्तोष र बुहारी करुणा आए। उनीहरू 1/67 Belmont Road, Glenfield NSW 2167 Sydney मा बस्ता रहेछन्। दिनको भोजन गरेर हामीहरू प्रा. अच्युतरमण अधिकारीका छोराबुहारीका निम्तोमा १:४५ अपराह्न



अच्युत श्रीमती, छोरा र बुहारीका साथ

Lapwing Way, Plumton, NSW 2761 तर्फ घरबाट प्रस्थान गऱ्यौँ। यहाँबाट ३० किलोमिटर टाढा रहेछ। नयाँ ठाउँमा जानुपर्ने भएकाले Navigator or GPS गाडीमा लगाएर सगुनले लग्यो। अपराह्न २:३० बजे हामी त्यहाँ पुग्यौँ। वनवाटिका वरिपरि भएको त्यो नयाँ वस्ति रहेछ। घरबाट निस्किएर उनीहरू सबैले हाम्रो स्वागत गरे। एकान्तमा घर एकतले नयाँ चिटिक्क परेको छुट्टै रहेछ। बाहिरबाट हेर्दा सामान्य जस्तो देखिए तापनि भित्रपट्टि चिटिक्क सजाएर

राखिएको सुन्दर कोठा, भान्सा, बैठक, शौचालय, पूजाकोठा, लाउण्ड्री आदिले भरिपूर्ण आधुनिक घर रहेछ। घरको भित्री भागमा स्यानु चौर, बारी, भित्री दलान, बैठक र मनोरञ्जनस्थल रहेछ। घरको अगाडिपट्टि फूलबारी, हरियो चौर र गाडी राख्ने खुला ठाउँ रहेछ। सबै मिलाएर राम्रो र एकान्तको वासस्थान लाग्यो। दुःखसुखका वार्ता भए। अच्युतजीकी श्रीमती केही बेरामी भए पनि अत्यन्त क्रियाशील, फरासिली र मिजासिली रहिछन्। छोरा सन्तोष मृदुभाषी अनुशासित र पितृभक्त रहेछन्। बुहारी वन्दना पनि सबै गुण भएकी सुशील गृहलक्ष्मी रहिछन्। अच्युतजी विद्वान्, सरल, क्रियाशील तथा लेखक कवि हुन्। उनीसँग मेरो धेरै अघिदेखि मित्रता छ। अघिपछिका साथै कोठेकविगोष्ठीमा हाम्रो सधैँ भेट हुने गर्दछ। उनी उन्नयन साहित्यिक पत्रिकाका प्रधान सम्पादक र संस्थापक पनि हुन्। परिवारमा बसेर केहीबेर भलाकुसारी गरेपछि अच्युतजी र म भित्री बैठकमा गयौँ। त्यहाँ उनले त्यहीँ गएर छन्दमा लेख्न थालेको क्रान्ति महाकाव्यको दोस्रो सर्गको केही अंश सुनाए। अत्यन्त राम्रो लाग्यो। त्यसपछि आफ्नै हातले घरमा कुशल गृहिणीहरूले तयार गरेका तिहारका सेलरोटी, स्वादिष्ट खिर र काउलीको तरकारी खायौँ। आतिथ्य अत्यन्त भव्य थियो, तृप्त भयौँ। आतिथ्य र न्यानो सद्भावका लागि धन्यवाद दिएर ५:३० बजे हामीहरूले त्यहाँबाट प्रस्थान गर्‍यौँ।

त्यहाँबाट प्रस्थान गरेर हामीहरू मित्र हरिकृष्ण पन्तको छोरा महेश र बुहारी ऋतुका निमन्त्रणामा अपराह्न ६:३० बजे उनीहरूको निवासस्थान 7/14 Short Street Wentworth Ville पुग्यौँ। उनीहरू हाम्रो नै प्रतीक्षा गरेर बसेका रहेछन्।

वरिपरि छिमेकीका घरहरू र बीचमा बालबालिका खेल्ने स्यानु चोक रहेछ। २ तले आधुनिक बाहिर इँटा र भित्र काठैकाठबाट बनेको कम्पाउण्ड भएको सुन्दर घर रहेछ। भित्रपट्टि पूजाकोठा रहेछ। श्रीमान्, श्रीमती र ४ वर्षे सुन्दर छोरो रहेछ। उनीहरूले हाम्रो अभिवादन सहितको न्यानो स्वागत गरे। उनको साँहिला बाबु रामकृष्ण पन्त २०१५ सालमा संस्कृत छात्रावासमा बस्तादेखि अहिलेसम्म नै मित्र भएको र रामकृष्णकै नाताले महेशको बुबा हरिकृष्ण पनि मेरो भाइ र साथी भएका छन्। केही वर्षदेखि पशुपतिको शङ्कराचार्यमठमा दुवै हामीहरू सँगसँगै वेदान्त पढिरहेको कुरा मैले भनें। सो कुरा महेशलाई हरिकृष्णले भनिसकेको रहेछ। त्यतिमात्रै नभएर हरिकृष्णले मलाई वेदान्त पढाउने गुरु पनि भनेको रहेछ। पुग्ने बित्तिकै उनीहरूले तिहारका सेलरोटी, मिठाइ आदि व्यञ्जन समेतले स्वागत गरे। हामीहरूमा उनीहरूले अत्यन्त शिष्टतापूर्वक न्यानो अतिथि–सत्कार अर्पण गरे। महेश अत्यन्त शिष्ट, शालीन र फरासिला रहेछन्। त्यसैगरेर उनकी श्रीमती ऋतु गृहकार्यमा कुशल, शिष्ट र मृदुभाषिणी गृहलक्ष्मी रहिछन्। एउटामात्र छोरो Child Care मा पढ्दैरहेछ। सानैदेखि अनुशासित र सुशील बालख देखेर आनन्द लाग्यो। त्यो सानो र सुखी परिवार रहेछ।


महेश श्रीमती र छोराका साथ

हामी बिदा हुन खोज्दा दुवै दम्पतीले रातको भोजन लिएर जान सौहाद्रतापूर्ण आग्रह गरेकाले हामीले अस्वीकार गर्न सकेनौँ। ऋतुले अत्यन्त स्वादिष्ट परिकार तयार गरेकी

थिइन् । दुवै दम्पतीले सोधी सोधी इच्छा भोजन गराए । अत्यन्त छोटो समयमा नै नानाथरीका मीठा व्यञ्जनहरू तयार गरेर पस्कनु ऋतुको कुशलता मैले देखेँ । त्यसरी अत्यन्त सौहार्दतापूर्ण व्यवहारले म अत्यन्त प्रभावित र ऋणी भएँ । राति ९ः३० बजे त्यहाँबाट बिदा भएर हामीहरू १० बजे घर आएर आराम गर्‍यौँ । आज दिनमा लेख्ने काम गर्ने समय मलाई भएन ।

आज संवत् २०६८ साल कार्तिक १३ गते आइतबार हो । अङ्ग्रेजी दिन अनुसार सन् २०११ अक्टोबर ३० हो । बिहान सबेरै उठेर नित्यकर्म सकेर प्रातःभ्रमणमा गयौँ । सदाझैँ गणेश मन्दिरमा गयौँ । आज त्यहाँ धोती फेरेर समवेत स्वरमा वेदपाठ गरेको सुनियो । भ्रमणको क्रममा Sydney market गएर मोजा र गञ्जी किनेर ११ बजे घर फर्कियौँ । दिनको भोजनपछि अहिले दैनन्दिनी लेख्तैछु । त्यसपछि अद्वैतसिद्धिको अनुवाद गर्नेछु । लेखिसकेर खाजा खायौँ । ४ बजे वसन्त कोइराला र उसकी अष्ट्रेलिया पढ्न आउँदा उसलाई सहयोगी अर्थात् dependent बनाएर साथै ल्याउने र भावी पत्नी जीना तामाङ ४ बजे अपराह्न फलफूल, रोटी र नाति सुदीपलाई खेलाउना समेत लिएर शिष्टताका साथ भेट्न आए । जीना सुशील, शिष्ट र व्यावहारिक जस्ती लाग्यो । वसन्तसँग घरमा सँगै बसेको छोरो जस्तै थियो र यहाँ पनि उसले हामीहरूसँग त्यस्तै व्यवहार गर्‍यो । हाम्रो धेरै पुरानो पारिवारिक सम्बन्ध छ । म २०३१ सालमा प्रमुख जिल्ला अधिकारी भएर


जीनाका साथ वसन्त

उदयपुरको गाईघाट जाँदा मेरा दुइटा छोरा सञ्जीव र सतीशलाई घरमा नै आएर वसन्तका बाबु गोविन्द कोइरालाले केही दिन पढाएका थिए । पछि म भूमिसुधार सचिव हुँदा गोविन्द कोइरालालाई मालपोत कार्यालय चाबहिल, काठमाडौँमा खरिदारमा ल्याएर काठमाडौँमा बस्ने वातावरण मिलाइदिएको थिएँ । त्यतिमात्र नभएर म गृहसचिव भएका बेला गोविन्दका जेठा छोरा विष्णुलाई ने.गु.वि. अहिलेको अनुसन्धानविभागमा भर्ना गरिदिएको थिएँ । अहिले ऊ डी.भी. परेर अमेरिकामा बस्तछ । माहिलो छोरा हेमन्तलाई ग्यालेक्सी विद्यालयमा भर्ना गरिदिएको थिएँ । हामी २०६१ सालमा बद्रीकेदार तीर्थयात्रामा जाँदा गोविन्द र उनकी श्रीमती गीतालाई साथमा लिएर गएका थियौँ र अहिलेसम्म पनि त्यो सम्बन्ध यथावत् छ । वसन्त यहाँ आएर परिश्रमी, दक्ष र उपार्जन गर्ने भएछ । ४ वर्ष अघि यहाँ आएर उसले अत्यन्त दुःख गरेर विभिन्न क्षेत्रमा काम गरेर प्रशस्त कमाएछ । नेपालमा जग्गा जमीन किनेछ । घरमा आमा बाबुलाई सधैँ खर्च पठाउँदोरहेछ र यहाँ जीना तामाङलाई खर्चदिएर पढाउँदो रहेछ । हाल माछाकम्पनीमा माछा विशेषज्ञका रूपमा काम गर्दोरहेछ । उसको मिहिनेत अनुसार कम्पनी मालिकले उसलाई घण्टाको बीस डलरदेखि ३० डलरसम्म दिँदोरहेछ । मिहिनेत गरेर राम्रो कमाइ गर्दोरहेछ । हामीहरू यहाँ आएको सुनेपछि भेटेर अत्यन्त स्नेह देखायो । जे जस्तोसुकै सहयोग गर्न पनि तयार छ, तर हामीलाई केही पनि नचाहिएकाले सहयोग लिन चाहेनौँ । वसन्त र जीना दुवैजना लिडकम, सिड्नीमा बस्तछन् । जीनाले पढाइ सकिछ । अब ऊ PR को लागि परीक्षा दिँदैरहीछ । उसको PR भएमा मात्रै वसन्त पनि यहाँ बस्न

पाउनेरहेछ । नभए नेपाल फर्कन पर्नेरहेछ । अहिले उनीहरू अनौपचारिक पतिपत्नीका रूपमा सँगै बसेका रहेछन्, PR भएपछि औपचारिक पतिपत्नी भएर यहाँ बस्ने उनीहरूको भावी योजना रहेछ । वसन्त यहाँ आएर धेरै बुझ्ने र चलाख भएछ । पहिले अङ्ग्रेजी बोल्न र बुझ्न नसक्ने वसन्त अहिले बोल्ने र बुझ्ने भएछ । उनीहरू साँझ ७ बजे फर्किए । हामीहरू पूर्ववत् टी.भी. हेरेर रातको खाना खाएर ९ बजे सुत्न गयौँ ।

आज २०६८ साल कार्तिक १४ गते सोमबार २०११ अक्टोबर ३१ तारिख हो । आज पनि सदाजस्तै सबेरै उठेर गायत्रीजप, नित्यतर्पण, वेद, श्रीमद्भगवद्गीता र श्रीमद्भागवतमहापुराणको पाठ गरेर प्रातःभ्रमणमा ९ बजे गयौँ । पार्क, फ्लेमिङ्टन र गणेशमन्दिर हुँदै १०:३० बजे घर फर्कियौँ । दिवाभोजनपछि अहिले म लेखिरहेछु । केहीबेर दैनिकी लेखेँ । लेख्न आलस्य लागेपछि बैठकमा गएर श्रीमतीसँगै टी.भी. र चलचित्र हेरेर बसेँ । केहीबेरपछि लेख्न कक्षमा आएर मैले अद्वैतसिद्धिको पाचौँ मिथ्यात्वविचार आजै शुरु गरेर आजै अनुवाद गरिसकेँ । छोटो रहेछ । त्यसपछि खाजा खाएर अपराह्न ५ बजे सायंभ्रमणमा गइयो । ६ बजे घर फर्कियौँ । ६:३० मा सगुन आयो । साँझ टी.भी. र चलचित्र हेरियो । चाँडै रातको खाना खाएर ओशोको प्रवचन सुन्दै ८:३० मा सुतियो ।

आज नोभेम्बर १ कार्तिक १५ गते मङ्गलबार हो । आज सधैँजस्तो नगरेर नित्यकर्म गर्नुभन्दा पहिले सबेरै उठेर केहीबेर अद्वैतसिद्धिको मिथ्यात्वमिथ्यात्वविचारको केही अंश नेपालीमा अनुवाद गरेँ । त्यसपछि नित्यकर्म सकेर स्वल्पाहारपछि ९ बजे प्रातःभ्रमणमा गएर १०:४५ बजे निवास फर्कियौँ । बुहारी

पर सरेकी हुँदा अहिले श्रीमतीले दिनको भोजन तयार गर्दैछन् र म खानुभन्दा पहिले दैनिकी लेख्तैछु ।

हामी दम्पती शक्ति नहुँदा नहुँदै र आउन इच्छा नहुँदा नहुँदै पनि कान्छो छोरो सगुनको शततको आग्रहलाई टार्न नसकेर आएका छौँ । यो संसार मिथ्या, क्षणिक र भ्रममात्र हो भन्ने जान्दाजान्दै पनि म यसलाई नै सत्य सम्झिएर घुमिरहेको छु, यो विडम्बना हो । दिवास्वप्न जस्तो हो भन्ने अद्वैतवेदान्तगत धारणा मेरो दृढ भएको छ । अहिले म अद्वैतसिद्धिको मिथ्यात्वविचार माथि कलम चलाइरहेको हुँदा त्यसबाट मैले व्यावहारिकरूपम नै प्रत्यक्षरूपमा आफैँले अनुभव गर्ने मौका पाएको छु । यसले मलाई सकारात्मक परिणति नै दिएको छ । अहिले आएर कुन्तीले भगवान् श्रीकृष्णसँग गरेको प्रार्थना फेरि मैले सम्झिएँ । जो यसप्रकार छ –

*अथ विश्वेश विश्वात्मन् विश्वमूर्ते स्वकेषु मे ।*
*स्नेहपाशमिमं छिन्धि दृढं पाण्डुषु वृष्णिषु ॥*

– भा.१।८।४१

यसबाट मेरो मोह समाप्त हुन सक्यो भने यहाँ आएको परिश्रम र व्यय सार्थक हुने मैले ठान्नेछु र जे गर्छन् भगवान् भलै गर्छन् भन्ने उक्ति चरितार्थ भएको म ठान्नेछु ।

मेरा अरू छोराछोरीका बारेमा पनि माथि लेखिसकेकै छु । मेरी श्रीमती इन्दिरालाई कसैले राम्रो पालनपोषण र सह्यारसुसार गर्ने वचन दिएमा जे जस्तो व्यवस्था गर्नुपर्दछ सो गरेर निश्चिन्त भएर मैले संन्यास लिनु नै उपयुक्त हुनेदेखेको छु । परत्र नसप्रने अब निश्चित भएपछि घरमा नै ढुकेर बस्नु भनेको आत्महत्या गर्नु नै हो । यस्तो भन्दै छु, तर यो वहाना

मात्रै हुनसक्तछ । किन भने आँट गर्त सके सबै कुरा छोडेर हिड्न सकिन्छ । यो कुरा भागवतमा भगवान् श्रीकृष्णले उद्धवलाई भन्नुभएको छ । यी सबै घर नछोड्ने बहाना मात्रै हुन् । जस्तै –

*अहो मे पितरौ वृद्धौ भार्या बालात्मजाऽऽत्मजा ।*
*अनाथा मामृते दीनाः कथं जीवन्ति दुःखिताः ॥*
*एवं गृहाशयाक्षिप्तहृदयो मूढधीरयम् ।*
*अतृप्तस्ताननुध्यायन् मृतोऽन्धं विशते तमः ॥*

– भा.११।१७।५७, ५८,

त्याग गर्न इच्छा गर्नेलाई यी केही कुराले पनि रोक्न सक्तैनन् । श्रीशङ्कराचार्य, सिद्धार्थ गौतम, ऋषभदेव, महावीर आदि महात्माहरूलाई कुनै कुराले पनि प्रवज्यामा जानबाट रोक्न सकेनन् । आँट नगर्दा मुक्तिको द्वार खोल्न समर्थ भएको दुर्लभ मानिसको जन्म बेकार हुनेभयो । भागवतले भनेको पनि छ । जस्तै –

*नातिस्नेह प्रसङ्गो वा कर्तव्यः क्वापि केनचित् ।*
*कुर्वन् विन्देत सन्तापं कपोत इव दीनधीः ॥*

*यः प्राप्य मानुषंलोकं मुक्तिद्वारमपावृतम् ।*
*गृहेषु खगवत्सक्तस्तमारूढच्युतं विदुः ॥*

– भागवत ११।७।५२,७४

भगवान् श्रीशङ्कराचार्यले पनि विवेक चूडामणिमा नरजन्मको महत्त्व यसरी देखाउनुभएको छ । जस्तै –

*जन्तूनांनरजन्मदुर्लभमतः पुस्त्वं ततो विप्रता*
*तस्माद्वैदिकधर्ममार्गपरता विद्वत्त्वमस्मात्परम् ।*
*आत्मानात्मविवेचनं स्वनुभवां ब्रह्मात्मनासंस्थिति*
*मुक्तिर्नो शतकोटिजन्मसु कृतैः पुण्यैर्विना लभ्यते ॥*

विवेकचूडामणि २

विदेश बस्ने मेरोमात्र मोहभङ्ग नभएर मेरी श्रीमती इन्दिराको पनि मोहभङ्ग भएको छ । हमीहरू यही नोभेम्बर ७ तारिख अर्थात् कार्तिक २१ गते सोमबार साँझ ७:१५ मा सिङ्गापुर एयरलायन्सको विमानद्वारा उड्ने भएका छौँ । चाँडै जान पाएकोमा म अत्यन्त खुशी छु । किनभने मेरो धेरै वर्षदेखिको ब्रह्माभ्यास डेढ महिना छुटे पनि फेरि चालू गर्न पाइने र यहाँ केही लेखेको छु तापनि घर फर्किएर अझै लेख्न पाइने इत्यादि । हामीहरू जस्तै बूढाबूढीहरू विदेशमा आएर समय थपी थपी वर्षौंवर्ष कसरी बस्छन् होला आश्चर्य लाग्छ । उदाहरणका लागि वर्षौंवर्ष आएर छोराबुहारीका घरमा रमाएर बसिरहेका पूर्वमन्त्री अच्युतराज रेग्मीदम्पती र ३ महिनाका लागि यहाँ आएका प्रा. अच्युतरमण अधिकारीले अर्को ३ महिना म्याद थपेको कुरा आजमात्रै फोनद्वारा मलाई भनेका थिए । दुवैजनाको नाम अच्युत भएकाले उहाँहरू बस्न सक्नुभएको होला कि ! तर म जस्तो संसारी च्युत व्यक्तिबाट सो हुनसकेन ।

दैनिकी सकेर अद्वैतसिद्धिको अनुवाद गरेँ । खाजा खाएर पाँच बजे बाहिर भ्रमणमा जान लाग्दा सगुन कामबाट फर्कियो । फर्कदा एउटा micro kettle र Motorola को touch mobile मेरा लागि $245 तिरेर लिएर आएछ । पैसाको कमीले गर्दा भनेजस्तो ल्याउन नसकेको आशयको कुरा गर्‍यो । पहिलेको

भन्दा नम्र र शालीन जस्तो देखियो । उसको आजको मुद्रा र व्यवहारले हामी दुवैको मन पग्लियो । कहिले सगुन हामीप्रति कठोर जस्तो हुन्छ र कहिले नरमजस्तो, उसको स्वभाव बारम्बार बदलिइरहन्छ । उसको व्यवहार र बोलीवचन अनुसार हाम्रो उसप्रतिको भावना पनि सधैँ वदलिइरहन्छ । यसबाट मलाई दुःखद आश्चर्य हुन्छ । मान्छे कति अस्थिर र स्वार्थी हुन्छ, यसैबाट र आफ्नै बारम्बार बदलिँदो व्यवहारबाट अनुमान गर्न सकिन्छ । जस्तै –

*क्षणे रुष्टाः क्षणे तुष्टा रुष्टा तुष्टाः क्षणे क्षणे ।*
*असंयमित चित्तस्य प्रसादोऽपि भयङ्करः ॥*

यस्तो कुरा सोच्दै हामीहरू घुम्न गयौँ । आज चिसो हावा चलेर जाडो भएकाले चाँडै फर्केर आयौँ । साँझपछि गफगाफ र हिन्दीचलचित्र अजुवा हेरियो । रातको भोजनपछि ९ बजे सुतियो ।

आज सन् २०११ नोभेम्बर २ तारिख बुधबार र वि.सं. २०६८ साल कार्तिक १६ गते हो । प्रातःकृत्य यथापूर्व नै रह्यो । दिनको भोजन गर्नुअघि आज मैले दैनिकी लेख्न शुरु गरेँ । भोजनपछि अद्वैतसिद्धिको अनुवाद गरेँ । शुरुमा अनुवाद गर्न लाग्दा म अनुवाद गर्न सक्तिन कि जस्तोलागेको थियो । सोही कुरा मैले २०६८ साल असोज १४ गतेको दैनिकीमा लेखेको छु, तर प्रयास गर्दैजाँदा भगवान्का कृपाले म अनुवाद गर्न सफल भएको छु । अब त्यति दुरूह लाग्दैन । कतिसम्म अनुवाद गर्न सक्तछु, प्रयास गर्दै जाऊँ ।

आज बाहिर आकाश सफा छ र शरद्ऋतुको नीलो आकशमा

सूर्य जाज्वल्यमान भएर चम्किरहेका छन् । नेपालमा वसन्त ऋतुमा फुल्ने शिरिश फुलेको छ । मन्दमन्द बतास चलिरहेको छ, त्यसै बतासमा यस वरिपरिका मसला आदिका अग्ला अग्ला वृक्षहरू आनन्दपूर्वक झुलिरहेका छन् । बाहिरको अनुपम दृश्य रमणीय छ र भित्रपट्टिको कक्षमा बसेर म अद्वैतसिद्धिको दृश्यत्वहेतुविचारको विचार गरिरहेको छु, अर्थात् अनुवाद गरिरहेको छु । खाजा खाएर सायंपरिभ्रमणमा गइयो । फर्किएर आएपछि पूर्ववत् कार्यक्रम टेलिभिजन र हिन्दीचलचित्र हेर्ने काम भयो । रातको खाना मीठो उत्तमान्न खाएर सुत्न गइयो ।

आज वि.सं. २०६८ साल कार्तिक १७ गते बिहिबार सन् २०११ नोभेम्बर ३ तारिख हो । हिजो राति बुहारी पूजाले अत्यन्त स्वादिष्ट उत्तमान्न, तीतेकरेलो र आलुको स्वादिलो तरकारी बनाएकी हुँदा मीठो मानेर खाएँ पनि । त्यसपछि अर्को दिन मेरो एक श्लोक अनुष्टुप् छन्दको कविता जन्मियो–

*स्वादिष्ट खीर देखेर लोभिएँ खाइयो पनि ।*
*भयो गर्मी बढ्यो ताप भएँ व्यथित नै अनि ॥*

त्यसैकारण अबेर ७ बजे उठेर नित्य प्रातःकृत्य सकेर स्वल्पाहारपछि Morning Walk मा गइयो । यहाँ हिजो रातिदेखि नै पानी परिरहेको छ । छाता ओडेर र स्वेटर लगाएर निस्किए पनि बतास सहितको सिरसिरे छड्के पानीले गर्दा जाडो भयो । पार्कको परिक्रमा गर्दै फ्लेमिङ्टन रेल्वेस्टेशन हुँदै सोझै गणेशमन्दिरमा गयौँ । त्यहाँ गणेशको वन्दना गरेर सधैँ जस्तो मिश्रीको प्रसाद र विभूति ग्रहण गरेर १० बजे आवास फर्कियौँ । आज मेरो शरीर केही अस्वस्थ भएकाले

केही खान मन छैन । बसेर लेख्ने काम शुरुगरेकोछु । दिक्क लागेकाले त्यति लेख्ने जाँगर र मन पनि छैन, तर पनि नियमित हुने प्रयास गरिरहेकोछु । म यहाँ आएपछि पहिले जस्तो दृढनिश्चययुक्त नभएर अत्यन्त ढुलमुले भएको छु । यहाँको हावापानी जस्तै मेरो मन पनि बारम्बार उघ्रने र धुम्मिने गरिरहेको छ । यहाँको हावा पानीको असरले यस्तो भएको हो कि पारिवारिक कारणले हो ? मैले बुझ्न सकेको छैन । काठमाडौँबाट यता प्रस्थान गर्दा मेरो मानसिक अवस्था यति अस्थिर थिएन । जता हेरे पनि उस्तै भएकाले ममा सायद यस्तो भावना उद्भूत भएको हुनसक्तछ । अपेक्षा गर्नै नहुनेमा बढी अपेक्षा भएकाले हुनसक्तछ । यो मेरै दोष हो । अहिले मैले गाउँको एउटा उखान सम्झिएँ – "घरै पिँडालु वनै पिँडालु, ससुराली जाँदा बाह्र हातको पिँडालु ।"

जता हेऱ्यो उतै बिराग बढेर आउँछ । सायद राग बन्धनको कारण भएकाले होला मलाई नियतिले यस्तो जुराएको हो । यो पहिले नै मैले बुझ्नुपर्दथ्यो । परिवारप्रतिको राग आत्मालाई चोर्ने चोर हो, घर कारागार हो र यिनीहरूको मोह खुट्टा बाध्ने नेल हो भन्ने पहिले नै चेतना भएको भए अहिले आएर यस्तो भावना पैदा हुने थिएन होला । शास्त्रले उद्घोष गरेकै छ –

*तावद्रागादयस्तेनास्तावत्कारागृहं गृहम् ।*
*तावन्मोहोऽङ्घ्रिनिगडो यावत्कृष्ण न ते जनाः ॥*

– भा. १०।१४।३४

वेदान्त पढेर मात्रै हुँदो रहेनछ, परेपछि थाहा हुने रहेछ । जे भये राम्रै भयो । आजको मेरो मन भोलिसम्ममा कस्तो हुन्छ ? हेरौँ यस्तै रहन्छ कि फेरि अङ्ग्रेजीको युटर्न भएर

बदलिन्छ, नेपालको अस्थिर राजनीतिजस्तै ।

आज दिनको अलिनो खाना दूध, केरा र चिउरा खाइयो । शरीर अस्वस्थ भएकाले खानमा संयमता लिएकोछु । हुन ता खानमा म सधैँ नै यस्तै हुँ । आज झन् सन्नियमित भएको छु । खाना खाएर अस्वस्थ नै भए पनि ४ बजेसम्म बिस्तारै अद्वैतसिद्धिको 'दृश्यत्वहेतुविचारः' को केही अंश अनुवाद गरेँ । हलुका खाजा खाएर घुम्न गयौँ । भ्रमणबाट फर्किएपछि पहिलेकै सरह टेलिभिजन र हिन्दीचलचित्र हेरेँ । रातको खाना विशुद्ध दूध र भात खाएर नियमित समय ९ बजे सुतेँ ।

आज २०६८ साल कार्तिक १८ गते शुक्रबार हो । नोभेम्बरको ४ तारिख हो । रातभरि शरीर अस्वस्थ जस्तो भएकाले अबेर ७ बजे ओछ्यानबाट उठेँ । बिस्तारै प्रातःकृत्य सकेर ९ बजे पार्क हुँदै गणेशमन्दिरमा गयौँ र आवासमा फर्कियौँ । यो दैनिकी दिनको साधा खाना खाएर अल्छी लागी लागी लेख्तैछु । अहिले दिनको १२:५० भएको छ ।

म यस उमेरमा पनि तिर्सना बोकेर यत्रतत्र घुमिरहेको छु । अहिले अष्ट्रेलियामा कान्छो छोरा र नातिलाई विजयाको टीका लगाइदिने बहानाले आएको छु भने आगामी वर्ष जेठो छोरो सञ्जीवको क्यानाडाको घरमा जाने शोचाइमा छु । शरीर बूढो भए पनि मन बूढो भएको छैन । 'तृष्णैव तरुणायते' र 'तृष्णा न जीर्णा' भन्ने कुरा चरितार्थ भएको छ । यही कुरा गोपीहरू भगवान् श्रीकृष्णलाई भन्छन् –

*कुर्वन्ति ही त्वयि रतिं कुशालाः स्व आत्मन् ।*
*नित्यप्रिये पतिसुतादिभिरार्तिदैः किम् ॥*

– भागवत १०।२९।३३

यस सन्दर्भमा राजा बलिले भगवान् वामनलाई भनेको कुरा अत्यन्त मर्मस्पर्शी, मननीय र स्पृहणीय समेत छ ।

*किमात्ममानेन जहाति योऽन्ततः*
*किं रिक्थहारैः स्वजनाख्यदस्युभिः ।*
*किं जायया संसृतिहेतुभूतया*
*मर्त्यस्य गेहैः किमिहायुषो व्ययः ॥*

– भागवत ८।२२।९

यो मेरो भनाइ होइन केवल राजा बलिको जीवनका अन्तिम समयको आक्रोशलाई यहाँ उद्धृतमात्र गरेको हुँ ।

हामी गृहस्थहरू आफ्नो परम्परा र वंश अक्षुण्ण राख्न सन्तानको उत्पादन गर्दछौँ । मान्छेले मात्र होइन यो कुरा जानी नजानी यावत् प्राणीहरूले गर्दछन् । चरअचर सबैमा हुने यो प्राकृतिक स्वभाव हो । यो सृष्टिचक्र सञ्चालन गर्ने काममा भगवान्लाई सघाउन प्रकृतिप्रदत्त सञ्चेतना यो हो । यो नियमलाई कसैले तोड्नसक्तैन । सृष्टिको प्रथम प्रभातदेखि नै प्रत्येक प्राणीले यही गरिरहेको छ र मुक्त नहोउञ्जेल यो गरिरहने छ । हामीलाई पूर्वजन्महरूको स्मृति छैन । यसै हुनाले अन्धो भएर अनन्तकालदेखि अनन्तकालसम्म हामीहरू आफ्नू सञ्चिति बोकेर ब्रह्मादेखि लिएर भुसुनासम्मका ८४ लाख योनिहरूमा घुमिरहन्छौँ । हाम्रा विभिन्न जन्ममा असङ्ख्य सन्तानहरू भए तर त्यसको लेखाजोखा छैन । मृत्युमा हामीलाई कसैले साथ दिँदैन र मृत्युबाट जोगाउन सक्तैन पनि । जसले मृत्युबाट जेगाउन सक्तैन त्यो माता, पिता, गुरु र स्वजन केही पनि होइन । जसले जोगाउन

सक्तछ त्यो नै स्वजन हो । यो कुरा राजा ऋषभदेवले राजपाट त्यागेर हिँड्ने बेलामा आफ्ना भरत आदि १०० भाइ छोराहरूलाई अन्तिम उपदेश दिँदै भनेका थिए । जुन अत्यन्त हृदयस्पर्शी, सबैले जान्नु पर्ने र अन्तिम समय आउनुभन्दा पहिले नै बुझ्नु अति आवश्यक छ । जस्तै –

*गुरुर्न स स्यात्स्वजनो न स स्यात्*
*पिता न सस्याज्जननी न सा स्यात् ।*
*दैवं न तत्स्यान्न पतिश्च स स्यान्*
*नमोचयेद्यः समुपेत मृत्युम् ॥*

– भागवत ५।५।१८

यही जन्मका सन्तान र स्वजनहरूले हाम्रो उद्धार गर्न सक्तैनन् भने अनन्त जन्मदेखि विस्मृतिका गर्तमा विलीन भइसकेका सन्तान र स्वजनले हाम्रो उद्धार कसरी गर्ने ? तैपनि हामीहरू अन्धा भएर सन्तानको कामना गर्दछौँ र हिरिक्क भएर यिनको पालनपोषण गर्दछौँ । यसै संसारमा वासना र संस्कर बोकेर घुमिरहन्छौँ । भगवान् श्रीशङ्कराचार्यलाई आफ्नी आमाले बिहा गर्ने र सन्तान जन्माउने आग्रह गर्दा शङ्कराचार्यले आफ्नी आमालाई भन्नुभएको वैराग्यपूर्ण भनाइ अत्यन्त मार्मिक छ । जुन यस्तो छ –

*कतिनाम सुता न लालिता*
*कति वा नेह वधूरभुञ्जिहि ।*
*क्व नु ते क्व च ता क्व वा वयं*
*भवसङ्गः खलु पान्थसङ्गमः ॥*

*कति पुत्र पियार गर्नु भो*
*कति वा पुत्रवधू पसे घर ।*
*अब ती सब खै कहाँ गए*
*सब हुन् पान्थसमान अस्थिर ॥*

दिनको खाजा खाएर ४ बजे घुम्न गयौँ । शरीर अस्वस्थ भएकाले चाँडै फर्किएर घर आएर आराम गरियो । अहिले अदालत चलचित्र हेरिरहेका छौँ । रातको खाना खाएर सुकला गऱ्यौँ ।

आज सं. २०६८ साल कार्तिक १९ गते २०११ नोभेम्बर ५ तारिख शनिबार हो । आज बिहान सबेरै ६ बजे उठेर प्रातःकृत्य र नित्यकर्म समाप्त गरेँ । नियमितरूपमा जाने गरेको प्रातःपरिभ्रमण आज जान मिलेन । किनभने बुहारी पूजाका दाजु शेखर र भाउजू विनीता दाहालले दिनको खाना खान बोलाएका हुँदा चाँडै त्यता जानु परेको छ । पर्सी कार्तिक २१ गते नोभेम्बर ७ तारिखमा नेपाल फर्कने निश्चित भएकाले भेटघाट र बिदाबारी हुने क्रम चलिरहेको छ । यसै क्रममा आजै रातको खाना खान भतिजो प्रकाशकी श्रीमती सचिताका दाजु पङ्कज कोइरालाका निम्तोमा ह्यारिश पार्क निवासमा जानु पर्ने भएको छ । यताभन्दा पनि नेपाल फर्कने मानसिकताले मलाई उत्फुल्ल बनाएको छ । यहाँ सबै सुविधा प्राप्त भए तापनि मलाई त्यही नेपालको माटोले तानिरहेको छ । लङ्का विजयपछि लक्ष्मणलाई लङ्काको राजा बनाउने प्रस्ताव आउँदा भगवान् श्रीरामले भन्नुभएको थियो –

*अपि स्वर्ण मयिं लङ्कां न मे लक्ष्मण रोचते ।*
*जननीजन्मभूमिश्च स्वर्गादपि गरीयसी ॥*



छोरा सगुनकुमार भट्टराईलाई स्वर्णपदक लगाइदिँदै पिता शरदकुमार भट्टराई

**वि.सं. २०२६ सालमा नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानले आयोजना गरेको कवि सम्मेलनमा सर्वप्रथम भई राजा महेन्द्रका हातबाट पाएको स्वर्णपदक आज मैले पारिवारिक समारोहका बीच कान्छो छोरा सगुनलाई हस्तान्तरण गरेँ । त्यसपछि सगुनको जेठान शेखरका निम्तोमा गाडीमा घरबाट ११ बजे प्रस्थान गरेर १२:१५ बजे उनको निवासस्थान** 8/3 Inovers Way Lindfield 2070 **को** unit **मा पुग्यौँ । दिनको भोजन तयार गरेर शेखर र विनीता प्रतीक्षा गरेर बसेका रहेछन् । सबैले शुद्ध शाकाहारी भोजन गर्‍यौँ । अत्यन्त राम्रो व्यवस्था गरेर बसेकारहेछन् । अब उनीहरू** PR **को प्रयास गरिरहेका रहेछन् । यहाँ नै बस्ने उनीहरूको इच्छा रहेछ । यहाँको सुविधा, स्वच्छता र आधुनिक चमकदमकबाट अरू नेपालीहरू सरह उनीहरू पनि लोभिएका रहेछन् । यसै देशमा समाविष्ट भएर जीवन बिताउन चाहेका रहेछन् । जसरी हिमालबाट निस्किएका नदीहरू समुद्रमा पुगेपछि त्यहीँ रमाउछन्, विलीन हुन्छन् र आफ्नू परिचय त्यहीँ समाप्त गर्दछन् । आफ्नू उद्गमस्थलमा फेरि फर्केर जाँदैनन् । हाम्रा युवायुवतीको विदेशप्रवासको नियति पनि त्यस्तै छ ।**



शेखर दाहाल श्रीमतीका साथ

त्यहाँबाट हामीहरू ४:१५ मा पङ्कज कोइरालाको निवासस्थान ह्यारिश पार्कमा जान प्रस्थान गर्‍यौँ। ठीक ५ बजे त्यहाँ पुग्यौँ। हाम्रो प्रतीक्षामा पङ्कज, उनकी श्रीमती ज्योति, छोरी श्रिया, भाइ सन्दीप कोइराला र उनकी श्रीमती कञ्चन, भतिज प्रकाश भट्टराई, उसकी श्रीमती सजीता र छोरी श्रेयसा समेत बसेकारहेछन्। घरको तल्लो तहको unit मा पङ्कज कोइराला अत्यन्त सुविधामा बसेका रहेछन्। भतिजो प्रकाश पनि परिवार सहित यसै घरको माथ्लिो तलाको unit मा बसेको कुरा मैले २०६८ साल असौज २७ गतेको दैनिकीमा उल्लेख गरिसकेको छु। परस्परको सहयोग र सद्भावना देखेर मलाई खुशी लाग्यो। पारिवारिक वातावरण अत्यन्त आदर्श र मधुरिमापूर्ण रहेछ। खेलबाड र गफगाफमा आनन्दपूर्वक केही समय बिताएर अत्यन्त हार्दिक आतिथ्यका लागि धन्यवाद ज्ञापन गर्दै ९:३० राति हामीहरू घर फर्कियौँ र आरामसित सुत्यौँ।

आज २०६८ साल कार्तिक २० गते ६ नोभेम्बर हो। हामी भोलि ७ नोभेम्बर साँझ ७:१५ बजे नेपाल फर्कने सन्दर्भमा सिङ्गापुर एयर लाइन्सको विमानद्वारा सिङ्गापुर जाँदै छौँ। सबेरै उठेर नित्यकर्म सकेर ८ बजे केही किनमेल गर्न Sydney market यस पटकको अन्तिम पटक गयौँ। त्यहाँ २ थान सामान्य ज्याकेट किनेर १० बजे घर फर्कियौँ र ११ बजे आज हरिबोधिनी एकादशी भएकाले फलाहारी भयौँ। त्यसपछि दैनिकी लेख्न थालेँ। त्यसैबेला ध्रुव दाहाल श्रीमती रचना र छोराछोरी सहित भेट्न आए। केही बिदाइका भलाकुसारी गरेर उनीहरूलाई बिदा गरेर फेरि म लेख्न बसेकोछु। केही लेखेर ४ बजे घुम्न गयौँ। गर्मी भएकाले चाँडै आवास फर्कियौँ। सगुन कामबाट फर्किएपछि पारिवारिक

सुखदुःखका कुरा भए । टेलिभिजन र हिन्दीचलचित्र नमकहलाल हेरेर रातको फलाहार गऱ्यौँ । भोलि नेपाल घर फर्कने हुँदा लुगाफाटो मिलाउने काम भयो । त्यसपछि ९ बजे निद्रा माताका काखमा आरामका साथ आराम गरियो ।

आज २०६८ साल कार्तिक २१ गते सोमबार सन् २०११ नोभेम्बर ७ तारिख हो । आज घर फर्कने उल्लासले रातको १:३० देखि नै निदाउँदै क्षणक्षणमा बिउँझिँदै गरेँ । अहिले ५:३० बजे उठेर दैनिकी लेख्न शुरुगरेको छु । नित्यकर्म सकेर प्रातःभ्रमणमा जानेछौँ । अरू विवरण पछि लेख्ने छु । ९ बजे प्रातःभ्रमणबाट फर्किएर आयौँ । आजै बेलुका ७:१५ बजे सिड्नी विमानस्थलबाट नेपालतर्फ उड्ने भएकाले चाँडैफर्किनु परेको हो । हाम्रा जो भएका सामानहरू बटुलेर पोकापन्तुरा बाध्यौँ । त्यसपछि म बिहान लेख्न थालेको दैनिकी सकेर त्यसपछि अद्वैतसिद्धिको अनुवाद गर्दैछु ।

म अष्ट्रेलिया आएको यो तेस्रो पटक हो । पहिलो पटक वि.सं. २०५४ साल कार्तिक ११ गते, तदनुसार सन् १९९७ अक्टोबर २८ तारिखमा र दोस्रो पटक वि.सं. २०५७ साल कार्तिक १६ गते, तदनुसार सन् २००१ नोभेम्बर २ तारिखमा आएको थिएँ । सरसरती बाहिरी दृष्टिबाट हेर्दा र हाम्रो देशको तुलनामा विकसित र सम्पन्न देखिन्छ यो देश । तर विकसित मुलुकहरूको दाँजोमाभने यो देश विकासोन्मुख देखिन्छ । यो ठूलो महाद्वीप भएको र यस द्वीपको ठूलो देश अष्ट्रेलिया भएको हुँदा भौगोलिक दृष्टिले समेटिसक्नु पनि छैन । सुरक्षाका दृष्टिले पनि अत्यन्त संवेदनशील र खर्चिलो देखिन्छ । चारैतिर समुद्रैसमुद्र भएकाले यहाँ जलसेना अत्यन्त ठूलो रहेछ । मैले बुझ्नेसम्म यहाँको जलसेना विश्वशक्ति मध्येमा पाँचौँमा पर्दोरहेछ । नभसेना

र स्थलसेना भने अपेक्षाकृत स्यानो रहेछ ।

यस देशमा विकासोन्मुख देशहरूभन्दा विकासका पूर्वाधारहरूमा सर्वसम्पन्न जस्तो देखिन्छ तर यातायातको सञ्जालमा सबभन्दा भरपर्दो साधन रेल्वेसेवा हो, तर यहाँ कमजोर नाममात्रको यातायात रहेछ । यो देशमा मरुभूमि र जङ्गल धेरै भएकाले रेल्वेसेवा र बससेवा सबैतिर सजिलै पुऱ्याउन सकेको रहेनछ । अर्को मलाई अत्यन्त छोएको कुरा यहाँको खानेपानीको अभाव हो । यस महाद्वीपमा सधैँ बगिरहने नदी, नाला, खोला र झर्नासमेत नभएकाले खानेपानीका लागि वर्षाको पानी र भूमिमुनिका पानीमा समेत निर्भर पर्नुपर्दोरहेछ । कहिलेकाहीँ धारामा पानी नआएर पसलबाट किनेर ल्याएर खानुपर्नेरहेछ । यस्तै यस्तै अभावहरू भएको मैले यहाँ आएको छोटो अवधिमा बुझेको कुरा हो ।

मैले खाना खाएपछि दैनिकी लेखिसकेर अद्वैतसिद्धिको अनुवाद २ बजेसम्म गरेँ । Sydney मा बस्ता नै 'दृश्यत्वहेतूपत्तिः' समाप्त गर्ने विचार गरेको थिएँ । आज नेपालतर्फ उड्न चाँडै तयार हुनुपर्ने भएकाले २:३० बजेदेखि अन्तिम पटक पोकापन्तुरा मिलाएर प्रस्थानका तयारीमा लागियो । ३ बजे सगुन कामबाट आएपछि खाजा खायौँ, परिवारको सामुहिक तस्वीर खिचेर ४ बजे हामीहरू गाडीमा Sydney Airport तर्फ बुहारी पूजा र नाति सुदीप समेतलाई लिएर हिड्यौँ । गाडी सगुनले चलायो । आज ट्राफिकजाम कम भएकाले ४:३० मा नै Airport पुगियो । सामान तौल गरेर भित्र पठायौँ ।



नेपालतर्फ प्रस्थान गर्नुअघि छोरा, बुहारी र नातीका साथ दम्पती

हामीहरूलाई बिदा गर्न आएका छोरा, बुहारी र नाति गहभरि आँशु लिएर बिदा भए । त्यो क्षण आमा र छोराका बीचमा अत्यन्त संवेदनापूर्ण थियो । मैले त्यो क्षण साक्षीभावमा रहेर अविचल हेरिरहेँ । त्यहाँबाट छुट्टिएर हामीहरू अघि बढ्यौँ । हामी दुवैजना Wheel Chair अर्थात् पाङ्ग्रे कुर्सीमा सवार भएर भन्सारमा गयौँ । त्यहाँबाट हामीहरूलाई Singapore जाने हवाइजहाज उडान नं. SQ 242 को प्रतीक्षालयमा लगेर चालकहरूले राखे । Boarding शुरु भएपछि Wheel Chair चलाउनेहरूले जहाजको ढोकासम्म ल्याएर छोडेर ठूलो सहयोग गरे । हामीहरू भित्र गयौँ । हाम्रो सीट ४२ A र B रहेछ । केही चाँडो भित्र पसेकाले हामीहरू आउँदा कोही आएका थिएनन् । बिस्तारै यात्रीहरू भरिए । यस उडानमा Australia बाट नेपाल जाने यात्रीहरूको बाहुल्य थियो । जता हेरे पनि नेपाली युवायुवती म देख्तैछु । जहाजको इन्जिन चालू भएको छ । अहिले यहाँको साँझको सात बज्यो । केही छिन अघिसम्म पानी परिरहेको थियो, तर अहिले आकाश उघ्रिएर पश्चिमतिर अस्ताउन लागेको घामको पहेँलो किरण म बसेको सीटमा पसेर मलाई रङ्गीन बनाइरहेको छ । ७:१५ मा जहाज उड्नेछ । फुर्सदको समय पाएर म यहाँ सीटमा बसेर दैनिकी लेखिरहेकोछु । रातको खानापछि अद्वैतसिद्धिको दृश्यत्वहेतू–पपत्तिको बाँकी अंश अनुवाद गर्नेछु ।

जहाज ठीक समयमा ७:१५ मा उड्यो । उड्दाखेरि Sydney लाई बादलले ढाकेको थियो । त्यो सबै पार गरेर अहिले जहाजले आफ्नू स्थिर गति लिएको छ । तर पनि कहिलेकाहीँ बादलको धक्काले थरथराउने गर्दछ । विशाल जहाजमा भरिभराउ यात्री देखिन्छन् ।

जहाजमा बसेर अहिले म अद्वैतसिद्धिको 'दृश्यत्वहेतूपपत्तिः' को अनुवाद गर्नुपर्ने बाँकी अंश नेपाली भाषामा अनुवाद गरिरहेको छु। अन्ततः 'दृश्यत्वहेतूपपत्तिः' सम्म अष्ट्रेलियामा बस्तै नेपालीमा अनुवाद गर्ने मेरो इच्छा पूर्ण भएको छ। त्यसपछि मैले केही पङ्क्ति दैनिकीको उत्तरभाग लेखेँ। त्यसैबेला जहाजमा खाने कुरा आयो। शाकाहारी खाना भारतीय प्रकारको स्वादिष्ट रहेछ। श्रीमतीलाई शाकाहारी अर्कै खालको खाना ल्यायो। दुवैथरी बाँडेर खायौँ। भोक लागेकाले होला मीठो मानेर खाइयो। जहाज अत्यन्त तीव्र गतिले ४५००० फीट माथि पुगेर स्थिर गतिमा उड्यो। तल अन्धकारले गर्दा दृश्य हेर्न पाइएन। सुत्नका लागि जहाजभित्रको बत्ती निभाइयो। रातमा जहाजमा उड्दा ननिदाउने मेरो पुरानो बानी यहाँ पनि चरितार्थ भयो। श्रीमतीको अवस्था पनि त्यस्तै रह्यो। उताउति फर्केर छटपटाएरै बित्यो। स्थानीय सिङ्गापुर समय अनुसार ११ र अष्ट्रेलियाको समय अनुसार रातको २ बजे विमानमा फेरि खाना आयो। भारतीय शुद्धशाकाहारी मीठो खाना थियो, तर अनिँदोले गर्दा खान मनलागेन। केही समयपछि क्याप्टेनले सिङ्गापुरको समय अनुसार रातको १२:५ बजे सिङ्गापुरको चाङ्गी अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रन तयार हुन घोषणा गर्‍यो। नभन्दै पूर्व घोषणा अनुसार स्थानीय समय अनुसार मध्य रात १२:५ बजे अर्थात् अष्ट्रेलियाको समय अनुसार रातको ३ बजे सिङ्गापुरको चाङ्गी अन्तर्राष्ट्रिय विमानस्थलमा अत्यन्त सहजताका साथ विमान अवतरित भयो। सुरक्षित अवतरणका लागि विमानचालकलाई हार्दिक धन्यवाद दिँदै हामीहरू अत्यन्त शिष्ट तथा सहयोगी विमानका परिचारिकाहरूको सहयोगमा विमानबाट बाहिर निस्कियौँ। थकाइ र निद्राले जीउ शिथिल थियो।

श्रीमतीको हालत मेरोभन्दा खराब थियो । दुवै खुट्टा सुन्निएकाले हिँड्न सक्ने अवस्था थिएन । नभन्दै सिङ्गापुर जहाजबाट बाहिर उत्रिने बित्तिकै ढोकामा नै Wheel Chair सहितका दुईजना चालकहरू हाम्रा प्रतीक्षामा रहेछन् । गुड्ने कुर्सीमा चढाएर हामीहरूलाई तिनीहरूले विश्रामका लागि रातको १ बजे विमानस्थल भित्रकै Ambassador Transit Hotel मा लिएर गए । त्यस होटेलको ८५ नम्बरको दुईजना सुत्ने कोठा मिलाएर भोलि नोभेम्बर ८ तारिखको बिहान ठीक समयमा आउने वचन दिएर तिनीहरू गए । त्यहाँ ५० सिङ्गापुर डलर तिरेर भोलिपल्ट बिहान ७ बजे होटेल छोड्ने गरी सुत्न गयौँ । कोठा ठीकै थियो तर कुसमय भएकाले निद्रा लाग्न मुश्किल पऱ्यो । ३:३० देखि ५ बजेसम्म म निँदाएछु । उठ्ता शरीर केही हलुका भएको रहेछ । कपाल पनि दुःखेको थिएन । श्रीमतीलाई केही आराम भयो । उठेर नित्यकर्म सकेर ७ बजेपछि होटेलबाट Check out गरेर Launge मा Wheel Chair को प्रतीक्षा गरेर बसेका थियौँ । त्यसैबेला Wheel Chair लिएर ७:४५ बजे महिला र पुरुष आइपुगे । हामीहरूलाई आराम साथ जहाजमा ९ बजे चढाएर उनीहरू फर्किए । अत्यन्त राम्रो सेवाका लागि मैले उनीहरूलाई धन्यवाद दिएँ । जहाजको A320 को १४ नं. का A र B सीटमा हामीहरू बस्यौँ । यही मौका छोपेर म दैनिकी लेखिरहेकोछु । सिड्नीबाट हिजो राति उड्दा जहाजमा धेरै नेपालीहरू थिए भने आज ८० प्रतिशत यस जहाजमा नेपालीहरू छन् । अहिले बिहानको ९ बज्यो र यात्रुहरू भित्रिने क्रम जारी छ । ९:१० बज्दा उड्ने कार्यक्रम भएकाले तदनुरूप उड्ने क्याप्टेनले घोषणा गरे । अब जहाज उड्न तयार भएको छ । बाहिर पानी परिरहेको छ । दिन अँध्यारो छ । केही ढिलो

गरेर ९:४५ मा मात्रै जहाज जमीन छोडेर उड्यो । आज पानी परेर र बादलले ढाकेर दिन त्यति हँसिलो देखिँदैन । जहाज बादलको पर्दा फोर्दै थर्थराउँदै मलेशिया माथि हुँदै उडिरहेको छ । अहिले हामीहरू २ जनालाई विमान भित्रका परिचारक र परिचारिकाहरूले राम्रो शाकाहारी खाना र चिसो पस्किरहेका छन् । स्वादिलो मानेर खाँदैछौं । पूर्वनिर्धारित समय अनुसार नेपालको समय अनुसार दिउँसो १२:५ मा पुग्नुपर्ने हो । उडानको अवधि ५ घण्टा १५ मिनेट रहेछ । नेपालको समय सिङ्गापुरको समय भन्दा २ घण्टा १५ मिनेट ढिलो छ । खाना खाएपछि केही समय आराम गरें । अहिले नेपालको समय ११:२५ भयो । जहाज बङ्गालको खाडी माथि उडिरहेको छ । तल केही सेतो बादल भए तापनि माथि आकाश उघ्रिएर नीलो देखिन्छ । घाम चम्किरहेको छ । जहाजका झ्यालबाट प्रखर घाम छिरेर मेरा बस्ने सीटमा नै मलाई तताइरहेको छ । शरद्ऋतुको आकाश खुलेर अत्यन्त मनोरम देखिएको छ । अहिले विमान भारतलाई नाघ्दै नेपालभित्र पसिसकेको छ । पश्चिमी नेपालका माछापुच्छ्रे, धवलागिरि समेतका केही उच्च हिमशृङ्खलाहरूको अवलोकन गराउँदै जहाज काठमाडौंतर्फ उडिरहेको छ ।

उत्तुङ्ग श्वेत शैलाद्रिको मनोरम छटाको दर्शन गराउँदै हामी चढेको ए ३२० वायुयानले पूर्वनिर्धारित समय १२:०५ मा त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलको धावनमार्गमा पदार्पण गऱ्यो । विमानबाट बिस्तारै झरेर सर्वप्रथम नेपाली भूमि ४६ दिनपछि स्पर्श गऱ्यौं र एयरटर्मिनलभवनभित्र रहेको अध्यागमनको कार्यालयमा गयौं । त्यहाँ एक यात्रुले पूरा गर्नुपर्ने झणझटिलो विधिविधान लाम् समय लगाएर ठूलो घुइँचाका बीच पूरा गरेर मन्सार पार गर्दै हामीहरू बाहिर निस्कियौं । सिड्नी र

सिङ्गापुरका विमानस्थलहरूमा प्राप्त Wheel Chair यहाँ उपलब्ध नभएकाले अत्यन्त मुश्किलसँग बाहिर निस्किएर एउटा ट्याक्सी लिएर हामीहरू अपराह्न २ बजे घर आइपुग्यौँ। जहाँ भए पनि आफ्नै आमा, आफ्नै जन्मभूमि र आफ्नै घर प्यारो हुन्छ। *'जननी जन्मभूमिश्च स्वर्गादपि गरीयसी।'* घरमा प्रवेश गरेर लामू उडान र प्रवासको थकाइ मार्‍यौँ।

हामीहरू आएका अर्को दिन अर्थात् २०६८ साल कार्तिक २३ गते बुधबार नोभेम्बर ९ तारिखका दिन अपराह्न १२:३० बजे अचानक ज्येष्ट पुत्र सञ्जीवकुमार भट्टराई र बुहारी सुषमा क्यानाडाबाट घर आइपुगे। अत्यन्त खुशी लाग्यो। कान्छो छोरो सगुनकुमार भट्टराई, बुहारी पूजा र नाति सुदीपकुमार भट्टराईसँग बिदा भएर घर आइपुगेकै भोलिपल्ट विदेशबाट जेठा छोरा बुहारी बाबुआमाको काखमा आइपुग्नु अत्यन्त हर्षको विषय भयो। उनीहरू सुषमाको उपचार र हाम्रो हेरचाहमा काठमाडौँ बसुञ्जेल अत्यन्त तल्लीन भए। आमालाई ठूलो LCD Television लगायतका अन्य उपयोगी बहुमूल्य सामान ल्याइदिए। पहिलेभन्दा स्वभावमा शालीनता र व्यवहारिकता दुवैमा आएको हामीहरूले पायौँ। अत्यन्त मधुर व्यवहार गरे। हामीहरू आउने दशैँमा क्यानाडा जान नसकेमा उनीहरू नै नेपाल आउने वचन दिएर हिजो मङ्सिर ५ गते सोमबार नोभेम्बर २१ तारिखका राति ११ बजे हङ्कङ् हुँदै क्यानडा जान Dragon Airlines को जहाजद्वारा दुवैजनाले प्रस्थान गरे। अब हामीहरू आगामी दशैँमा सबै छोरा बुहारी, छोरी र नातिनातिनाहरू समेत काठमाडौँको आफ्नै निवासस्थानमा जम्मा भएर विजयाको उत्सव मनाउने प्रतीक्षामा छौँ।

उपर्युक्त अनुसार मेरो लेखिरहने बानी अनुसार यस पटकको

दैनिकीका रूपमा मैले यो यात्रा वृत्तान्त लेखेँ । दैनिकीका रूपमा प्रत्येक दिन टिपोट गरेर अष्ट्रेलियाप्रवासका समयमा जुन दिन जस्ता भावनाहरू मेरा मनमा सहजरूपमा प्रस्फुटित भए 'मैले जे देखेँ' तिनलाई कत्ति पनि परिमार्जन नगरीकन मैले लिपिबद्ध गरेँ । नेपाल फर्केपछि अन्तिमरूप दिन सम्पादन गर्दा मैले निकै परिमार्जन गरेँ । किनभने जस्ताको तस्तै राख्दा सबैलाई सुपाच्य हुन नसक्ने र आन्तरिक कुरूपतासमेत देखिने सम्भावना मैले देखेँ । *'सत्यं ब्रूयात् प्रियं ब्रूयात् न ब्रूयात् सत्यमप्रियम्'* भन्ने वचनलाई पनि मैले हृदयङ्गम गरेँ । कहिलेकाहीँ नाङ्गो यथार्थ पनि अप्रिय हुन्छ र भद्दा देखिन्छ । त्यसैकारण सत्यलाई पनि कहिलेकहीँ असत्यको आवरण दिएर कुरूपतालाई पनि शृङ्गार गरेर दर्शनीय बनाउनु पर्नेरहेछ । मैले पनि यहाँ त्यसै गरेको छु ।

अहिले गृहस्थ नै वानप्रस्थ भएको छ। घर नै एकान्त दरि भएको छ । स्वदेश नै परदेश भएको छ र जनसङ्कुल पनि नीरव तथा निस्पन्द बनेको छ । म निवृत्त जीवन अत्यन्त आनन्दका साथ चिन्तन, मनन र लेखन गरेर बिताइरहेको छु । शरीरको धर्म अनुसार हामी दम्पती केही रुग्ण भए पनि असक्त चाहिँ भएका छैनौँ । सात्विक आहार लिएर वेदान्त श्रवण र रामनाम जपेर हाम्रा शेष दिनहरू आनन्दपूर्वक बितिरहेका छन् । जीवित पुरुषका पञ्चज्ञानेन्द्रियहरू जस्ता हाम्रा पाँच सन्तानहरू छन् । भित्र र बाहिर बसेर उनीहरूले हाम्रो सेवा अहर्निश गर्नेगर्दछन् । नानाथरीका वस्तुहरू प्रदान गरेर हाम्रो सेवा गर्नेगर्दछन् । घर आएका बेला अत्यन्त सौहार्दरूपमा मृदु तथा मधुर वचनद्वारा समेत बिर्सनै नहुने गरी हाम्रो सत्कार गर्दछन् । कहिले आफ्नै प्रवासमा बोलाएर

मन, वचन र कर्म समेतले दुवै दम्पती मिलेर कहिल्यै विस्मृतिमा नजाने गरी उच्च मधुर वाणीद्वारा स्तुति सेवा गर्दछन् भने त्यतिले पनि सेवा नपुगेमा ट्रङ्कल गरेरै भए पनि कहिल्यै नबिर्सिने खालको वाणीद्वारा सेवा गर्दछन् ।

शारीरिक सेवा भन्दा पनि वाचिक सेवा हामीहरूले प्रशस्त पाएका छौँ । त्यसमा पनि मैले मधुरिमायुक्त वाचिका सेवा कहिले दूरभासबाट, कहिले आमनेसामने भएर स्ववासमा र कहिले प्रवासमा गएर पनि राम्रोसँग पाएको छु । आफ्ना ज्ञानी सन्तानहरूबाट योभन्दा बढी के अपेक्षा गर्न सकिन्छ र ? यसबाट शेष दिनहरू विना आसक्ति आनन्दसँग काट्न मलाई सम्बल प्राप्त भएको छ । म अत्यन्त आनन्दित भएको छु ।

साथै रहेका छोराबुहारीबाट हाम्रो सधैँ शुश्रूषा र हेरविचार हुनु स्वाभाविकै हो । बोलीवचन र आज्ञाकारिता अनुपम छ । कान्छी छोरीबाट अहोरात्र सेवा पाइरहेका छौँ । अमेरिकामा रहेकी ठूली छोरीले सधैँ टेलिफोन गरेर हाम्रो हालखबर सोध्नु उसको दिनचर्या नै बनेको छ । ऊ बाबु आमा भनेपछि हुरुक्कै हुन्छे र सधैँ हाम्रो नाम जपी नै रहन्छे । पहिले जन्मेकी छोरी भएर होला सबैले भन्दा बढी सेवा र माया गर्दछे । मन, वचन र कर्मसमेतबाट हाम्रो सेवा पहिलेदेखि नै गरिरहेकी छे । त्यो सेवाको क्रम अहिले झन् तीव्ररूपमा बढेको छ । आफ्ना सासू र ससुराको गरेजस्तै अनुकरणीय सेवा स्वदेशमा र विदेशमा वस्तासमेत हाम्रो गरिरहेकी छ । यस कुराको वर्णन गरेर साध्य छैन । त्यसैप्रकारको सेवा आफूले मात्र नगरेर आफ्ना छोराछोरी र भाइबुहारीहरूसमेतलाई उसले सिकाइरहेको अनुभव हुनथालेको छ । त्यसैकारणले नै होला क्यानाडामा बसेको ठूलो छोरो पनि उस्तै पितृमातृभक्त

भएको छ । हाम्रो प्रशंसा सधैँ गरिरहन्छ । छोरो नै भक्त भएपछि बुहारी नहुने कुरै भएन । कान्छो छोरो सगुनका बारेमा मैले यहाँ धेरै लेख्नै परेन र बुहारीकै बारेमा पनि यहाँ धेरै लेखेर पिष्टपेषण गर्नु आवश्यक परेन । किनभने उनीहरूकै आतिथ्यमा अष्ट्रेलियामा बसेका समयमा लेखिएको यो दैनिकी भएकाले एकप्रकारले यो उनीहरूकै कथा हो भने पनि हुन्छ । उनीहरूलाई प्रकृति र पुरुषका रूपमा मैले लिएको छु ।

यसरी हाल हामीहरू दुवैजना छोराबुहारीहरू र छोरीहरूको अपार स्नेह, श्रद्धा र हेरबिचार पाएर बाँचिरहेका छौँ । हाम्रा सन्तानहरूलाई भगवान्ले सधैँ सद्बुद्धि दिइराखून् । हामीहरूले आफ्ना बाबुआमालाई जे जस्तो व्यवहार गर्दछौँ भविष्यमा हाम्रा छोराछोरीले पनि त्यस्तै व्यवहार हामीसँग पनि गर्नेछन् भन्ने चेतना उनीहरूको अन्तःकरणमा बेलैमा उदय भएको प्रमाण यसबाट पनि पाउन सकिन्छ । उनीहरूलाई भगवान्ले दीर्घजीवी बनाएर सधैँ रक्षा गरिराखून् । हाम्रो शुभाशीर्वाद अभेद्य कवच बनेर उनीहरूको सधैँ रक्षा गरिरहनसकोस् ।

संसक्तिभित्र पालेर घुमेको छु भई कुधी ।
असंसक्ति बढेको छ यद्वा ऐले भई सुधी ॥

# लेखकका प्रकाशित ग्रन्थहरू

१. उसैको लागि एक अध्ययन – २०२६
२. ऋतुमन्थन, समीक्षात्मकग्रन्थ – २०४४
३. सिर्जनाका फूलहरू, कवितासङ्ग्रह – २०५१
४. बहादुर शाह, खण्डकाव्य – २०५२
५. श्रद्धाञ्जलि, शोककाव्य – २०५२
६. गीत तथा भजनहरू – २०५२
७. अमरसिंहको चिट्ठी, खण्डकाव्य (ने.रा.प्र.प्र.) – २०५३
८. क्रान्तिदूत, खण्डकाव्य – २०५३
९. विविधयात्रा, कवितासङ्ग्रह (साझाप्रकाशन) – २०५५
१०. यात्रैयात्रा, कवितासङ्ग्रह – २०५८
११. पत्रैपत्र, कवितासङ्ग्रह – २०५९
१२. पृथ्वीविजय, काव्य – २०६२
१३. ज्ञान र भक्ति (श्रीराजर्षिजनकस्मृतिकोष) – २०६३
१४. रासपञ्चाध्यायी (श्रीराजर्षिजनकस्मृतिकोष) – २०६४
१५. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
१६. ब्रह्मसाक्षात्कार (श्रीराजर्षिजनकस्मृतिकोष) – २०६५
१७. उपनिषत्सार (श्रीराजर्षिजनकस्मृतिकोष) – २०६७
१८. ब्रह्मसूत्रसार (श्रीराजर्षिजनकस्मृतिकोष) – २०६७
१९. अनुस्मृति – २०६७
२०. मणिरत्नमालाको अनुवाद – २०६७
२१. वन्दना – २०६८
२२. ब्रह्मसूत्रको अध्यास र चतुसूत्री (रत्नपुस्तकभण्डार) – २०६८
२३. वेदान्तपरिभाषासार (रत्नपुस्तकभण्डार) – २०६८
२४. कविशतक – २०६८
२५. तेस्रो अष्ट्रेलियायात्राको दैनिकी – २०६९
२६. अद्वैतसिद्धिः (श्रीराजर्षिजनकस्मृतिकोष) – २०६९
२७. परमसत्य (श्रीराजर्षिजनकस्मृतिकोष) – २०६९